# समर्पण

मेरी बजू स्व. सन्चरानी लिम्बू
जसले आफू पीरो चुसेर
आलुको तरकारी
खुवाउनुभो र
**मेरो बालापेट भरिदिनुभो,**

मेरा बाजे स्व. असलबहादुर लिम्बू
जसलाई म बाल्यकालमा
गुलेली बनाउन कर गरिरहन्थें
तब उहाँ मलाई कति पनि नझर्किकन
खालखालका बाँसका गुलेली बनाइदिनु हुन्थ्यो
**जुन बोकेर म उड्ने चरासित खेल्ने गर्दथेँ,**

मेरो शिरमा उहाँहरूकै हात छ
आशिर्वाद पाइरहेको विश्वास छ
कुनैबेला उहाँहरूले
मबाट आशा गर्नु हुन्थ्यो
**जसलाई पूरा गर्न म कोसिस गरिरहेछु,**

यसरी मनको मझेरीमा
सदा झुल्किरहने तर नअस्ताउने
ती श्रद्धेय स्वर्गीय आत्माहरूको
चीरशान्तिको कामना सहित
भक्तिपूर्वक पाउमा यो कोसेली
समर्पण गर्दछु।

# प्रकाशकीय

(प्रथम संस्करण)

जीवनसंग साहित्य पप्रगाढ र शाश्वत भएर गाँसिएको हुन्छ। यथार्थमा साहित्य जीवनको धमिलो सङ्लो प्रतिबिम्ब हो। मन र मस्तिष्कको मन्थनबाट प्रसुप्त साहित्य एउटा सफल साहित्य हो। जसमा जीवनका अनुभव र अनुभूतिलाई स्रष्टाले आ–आफ्नै शब्दशिल्प र कलाका अभिव्यक्त गर्छन्। ती स्रष्टाका भोगाइहरूभित्र आफ्नै जीवनका प्रतिच्छाया देख्छन्, दृष्य परिदृष्य देख्छन्। सुख–दुख आँसु र हाँसो देख्छन्। एउटा सफल साहित्यले सधैं पाठकको मन र मुटुलाई तरङ्गित पार्दछ, प्रभावित पार्दछ।

नवराज सुब्बा जसलाई हामी यसअघि एक कवितका रुपमा चिन्दथ्यौं एक गीतकार, एक कलाकार र एक स्वास्थ्यकर्मीका रुपमा चिन्दथ्यौं। वाणी प्रकाशनले उहाँको – जीवन मेरो शब्दकोशमा कवितासङ्ग्रह, जनस्वास्थ्य पाटा, बाटा र अनुभूति स्वास्थ्यसम्बन्धी आलेखसङ्ग्रह केही वर्षअघि प्रकाशित गरेको थियो। आज तिनै स्रष्टाको संस्मरणात्मक निबन्धसङ्ग्रह मनको मझेरीलाई यस प्रकाशनले यहाँहरूसमक्ष प्रस्तुत गरेको छ। एउटा कवि, कलाकारलाई एउटा निबन्धकारको रुपमा राख्न पाउँदा हामीलाई खुसी लागेको छ।

आफ्ना मनका मझेरीमा गाँसिएका संस्मरणहरूलाई निबन्धकार सुब्बाले अति नै सरल र कलात्मक रुपमा प्रस्तुत गरेका छन्। जुन निबन्ध मानवीय समवेदनासँग निकट छन्। ग्रामीण जनजीवनका कथा–व्यथा र विषयवस्तुको विविधता यस सङ्ग्रहभित्रका निबन्धहरूमा पाइन्छन्। स्रष्टा सुब्बाले आफूभित्र

जीवन्त भएर रहेका जीवनका सङ्ला धमिला स्मृतिलाई पाठकसमीप राख्ने प्रयास गरेका छन्। भौतिक रुपमा निबन्धका ती पात्रहरू रहे पनि, नरहे तापनि आफ्ना शब्द आलेखमा जीवन्त राखेका छन् ती पात्रहरूलाई। जुन प्रसङ्ग निबन्धहरूसँग गाँसिएका छन्। ती प्रसङ्गहरूलाई निबन्धकारले प्रेरक प्रसङ्गका रुपमा लिएका छन्। आफ्ना सफलताका सूत्र र श्रेयका रुपमा लिएका छन्। पहाडी कुहिरोले ढाकेको सुन्दर गाउँ कुहिरोका पर्दाबाट मुक्त भएर जब आफ्नो कञ्चन सौन्दर्य उद्घाटित गर्छ त्यति बेला सौन्दर्य पारखीहरूका आँखा, मन र मुटुमा एउटा आनन्दको अनुभूति हुन्छ। यस सङ्ग्रहभित्रका निबन्धले त्यस्तै अनुभव र अनुभूति हुने आशा राखेका छौं।

आँखा, मन र मुटुभित्र अतीतलाई स्मृतिका क्यामेराले कैद गरेर खिचिएको शाब्दिक सुन्दर तस्वीर लेखकको मनको मझेरीमा जसरी टाँसिएको छ, त्यसरी नै पाठकको मनको मनको मझेरीमा पनि टाँसिने र जीवनन्त रहने अपेक्षा राख्दै मनको मझेरी प्रकाशनको अभिभारा दिएकोमा लेखकप्रति यस प्रकाशन हार्दिक धन्यवाद व्यक्त गर्दछ।

वाणी प्रकाशन
विराटनगर, नेपाल

# “मनको मझेरी” भित्र नवराज सुब्बा

(प्रथम संस्करण)

- परशु प्रधान

नवराज सुब्बाको ‘मनको मझेरी’मा लेख्न लागेको यो मेरो भूमिका अन्तिम हुनसक्छ। अन्तिम नहुन पनि सक्छ। किनभने भोलि नेपाली साहित्यमा नवराजहरू आउलान्, तीनलाई स्वागत गर्न, माला लगाइदिन र नायक बनाउन अवश्य बाध्य हुनुपर्छ भन्ने मलाई लाग्छ। किनभने म स्रष्टा हुँ– निर्बन्ध र स्वतन्त्र विचार राख्छु। यसैले मलाई बचाएको छ, बाँच्ने विश्वास बढाएको छ।

६४ वर्षको मेरो जीवनकालमा धेरै साथीहरू, सहयोगीहरू, नयाँ–पुराना सर्जकहरूसँग भेटघाट भयो। २३ वर्षसम्म शिक्षा क्षेत्रसँग सम्बन्धित भएँ– धेरै चेला र गुरूहरूसित। पढ्ने र पढाउने, लेख्ने र लेखाउने काममा संलग्न भएँ। २४ देखि २६ सालसम्म साझा यातायातमा काम गरें। कण्डक्टर र ड्राइभरको संगतमा परियो। कहाँको शैक्षिक क्षेत्र, कहाँको यातायात। आकाश–जमिनको अन्तर, अनि २७ देखि ५२ सालसम्म अर्थात् पूरा २५ वर्ष सरकारी जागिरले खायो। त्यसपछि साहित्यिक यात्रामा छु, सृजनामा छु, स्रष्टाहरूसँग छु, सभाभेलामा र गोष्टीहरूमा छु। यस लामो जीवनकालमा लगभग पचास हजार मान्छेहरूसित भेटघाट र चिनजान भयो होला। आफ्नो कामको सिलसिलामा कथाको प्लटको खोजीका क्रममा, पात्र–पात्राहरूको छनौटमा धेरै मान्छेहरू भेटिए। ती सबलाई म अहिले सम्झन सक्तिन। सबैलाई बिर्सन पनि सक्तिन।

अहिले लाग्छ– कतिपय व्यक्तिहरूसित भेटघाट र चिनजान नै नभएको भए हुन्थ्यो, सम्पर्क नै नभएको भए जाती हुन्थ्यो। अनि कतिपय व्यक्तिहरूको भेट अविस्मरणीय रहेको छ– बिर्सन चाहेर पनि नसकिने। मस्तिष्कको कम्प्यूटरबाट ज्यान गए पनि डिलिट नहुने अर्थात् हटाउन, मेट्न नमिल्ने। धेरै ढिला भेट भयो, जीवनको आखिरी मोडमा अथवा उत्तरार्धमा– नवराज सुब्बासँग। एकदुई पटकको भेटमा नै मलाई लाग्यो – आजभन्दा २० वर्ष अगाडि सुब्बासँग भेटेको भए? चिनेको भए? सम्पर्क रहेको भए? हाम्रो इतिहास नै बद्लिन सक्थ्यो कि? तर नियतिलाई जस्तो मञ्जुर थियो – त्यही भयो। मोरङ विराटनगरमा हाम्रो भेट भयो, वाणी प्रकाशनले हामीलाई सामिप्यमा ल्यायो र आज इतिहासमा हामी केही रेखा कोर्न समर्थ भयौं।

सारांशमा– उहाँ सुब्बा– मेरो मानसमा कोरिएको रेखाचित्र उहाँसँग मिल्दैन। माछा–मासु र अल्कोहल छुन्नन्। अरूलाई सेवा गर्नमा रमाइलो मान्छन्। नेवार समुदायको ज्वाइँ भएर जातीय पर्खाल भत्काएका छन्। व्यवहार र बोलीमा जुन संस्कार र परिमार्जन देख्छु– आफैलाई आश्चर्य लाग्छ। नरम र सरल व्यवहार, विनम्र, संवेदनशील, उदार र विवेकपूर्ण व्यक्तित्वका धनी नवराज सुब्बाको जति प्रशंसा गरे पनि थोरै लाग्छ। मलाई लाग्छ, धेरै प्रशंसा गर्नु राम्रो होइन, तर उपयुक्त व्यक्तिको प्रशंसा नगरी बस्नु पनि राम्रो होइन। मलाई लाग्छ– फूललाई फूल भन्नैपर्छ, ढुङ्गालाई ढुङ्गा। भित्र एउटा कुरा बाहिर अर्को अभिव्यक्ति गर्नेहरू असल र इमान्दार हुन सक्तैनन्, बरु बेइमान हुन् भनी ठोकुवा गर्छु। हामीले सुब्बा र राईहरूलाई अगाडि बढ्न दिएनौं, हामीले सुनार र परियारहरूलाई बाटो छेक्यौं, हामीले यादव र चौधरीहरूलाई फरक आँखाले हेर्‍यौं, हामीले खालि आफ्नो मात्र भर्‍याङ्ग बनायौं, अरू चढ्न आउँदा भर्‍याङ्ग नै

भाँचिदियौं र नै आज राष्ट्रको दुर्गति छ, जनताको बिजोग छ। त्यति मात्र होइन– राष्ट्रको सार्वभौमिकता संकष्टमा छ। यसैले म भन्छु– हामीले समयमा नै धेरै नवराज सुब्बाहरूलाई चिनौं र तिनलाई खुल्ला आकाश दिउँ, सङ्गलो नदी दिउँ र राजमार्ग दिउँ।

लाग्छ, नवराज सुब्बाको यो तेस्रो प्रकाशित कृति हो 'मनको मझेरी'। यो कृति निबन्ध हो, प्रबन्ध हो, यात्रा–नियात्रा हो, स्तम्भ वा समाचार, कथा हो। यसमा संस्मरण छ, आत्मवृत्तान्त छ, कविता छ, कथा छ, खबर छ, घटना छ, अनुभूति र विचार छ।

निबन्धसम्बन्धी केही परम्परागत परिभाषाहरू यी हुन्–

- "मेरो निबन्धको विषय म नै हुँ, किनभने मैले सबभन्दा बढ्ता मलाई नै चिनेको छु।" मोन्टेग
- "निबन्ध विकीर्ण चिन्तन हो।" बेकन
- "निबन्ध मनका भावधारालाई श्रृङ्खलाविहीन रूपमा गरिएको हठात् अभिव्यक्तिको एउटा छोटो रचनाविशेष हो।" सेन्टव्यूभ
- "निबन्धको विषय जे जस्तो भए पनि यसको क्षेत्र अत्यन्त विस्तृत र असीमित हुनुका साथै सही निबन्ध व्यक्तिपरक नै हुन्छ।" विलियम् हड्सन्

मोन्टेगको परिभाषा केलाउँदा उनले निजात्मक विषयलाई जोड दिएका छन् भने बेकनले छरिएका विचार र दृष्टिकोणलाई। सेन्टव्यूभले निजीपनलाई महत्व दिएका छन् भने हड्सनले वैयक्तिक भनेका छन्।

महाकवि देवकोटाले निबन्धलाई "यो एक किसिमको धूर्त बदमास ठिटो हो, जो सडकमा हिड्दा कहिले ढुङ्गा हान्छ, कतैकतै आनन्दले फुलेर हेर्छ तर घोरिंदैन..." भनेका छन्।

यही क्रममा सुप्रसिद्ध समालोचक एवम् निबन्धकार कृष्णचन्द्रसिंह प्रधानका यी विचारहरू मननीय छन्–

जिन्दगीका टिपोटहरू अर्थात आत्मवृत्तान्त 'दुई' का केही अंशहरू यी हुन्–

"हेर्दा तुच्छ, गौण, बेकारको लाग्ने जीवनको पनि आफ्नो अर्थ हुन्छ, महत्व हुन्छ।"

"यसभित्र व्यक्तिगत जीवनसित सम्बन्धित केही सामान्य घटनाहरू पनि छन्। जिन्दगीका टिपोटहरू भनेर यसलाई स्वीकारेको छु। त्यहाँबाट गुज्रेका क्षण, दिन, विगतहरू राम्रो मानेर भन्दा त्यो एउटा वास्तविकता हो, जहाँ आफ्नै वृत्तको यथार्थ र परिवेश भएर दिग्दर्शित हुन्छ।"

"अनाम सत्य" बाट लिइएका उहाँको यो अंश पनि विचारोत्तेजक छ – "निबन्ध एक कला हो। प्रतिभाको फा"टभित्र त्यो स्वतन्त्र छ र छुट्टै जीवन जिउने संरचनाको आयाम खोजिरहन्छ।"

"मलाई लाग्छ– स्रष्टा आफैमा एउटा समय हो। ऊ समय बोल्छ, समय लेख्छ, समय बाँच्छ।" "समय सुनामी" का यी दुई हरफ पनि त्यत्तिकै मननीय छन्।

यसरी विभिन्न परभाषाहरू केलाउँदा निबन्धलाई यसरी स्वीकार गर्न सकिन्छ–

- निबन्धमा वैयक्तिकता अर्थात निजीपन हुन्छ।
- निबन्धमा मानवीय संवेदना र अनुभूति हुन्छ।
- निबन्धमा विवेचना र तर्क हुन्छन्।
- निबन्धमा आकस्मिक प्रारम्भ र आकस्मिक अन्त्य हुन्छ।
- निबन्धमा स्वतन्त्र विचार र दृष्टिकोणहरू हुन्छन्।

निबन्धका यी सबै मानकहरूलाई नवराज सुब्बाका निबन्धहरूसँग तुलनात्मक अध्ययन गर्ने काम समालोचकहरूको हो। म आफूलाई समालोचक ठान्दिन, न टिप्पणीकर्ता नै। तर पनि नवराज सुब्बाको यस ग्रन्थमा केही कुरा लेख्तै छु, आमुख–आलेख टिप्दैछु वा थप कुरा भन्न लागेको छु। "भूमिका

लेखकको भूमिका” शीर्षक लेखमा डा.जीवन नामदुंगले “भूमिका भनेको पुस्तकको अनिवार्यता जस्तै भैसकेको छ, भूमिका बिनाको पुस्तक कल्पना गर्न पनि सकिंदैन” भनी यसको महत्ताबारे प्रकाश पार्नुभएको छ। अझ यसको महत्व र आवश्यकतालाई उहाँले यसरी प्रष्ट पार्नु भएको छ– “भूमिकाको पृष्ठभूमि पक्रेर स्रष्टाको वैचारिक प्रतिवद्धता र सिर्जनाप्रतिको निष्ठाभावको आभास प्राप्त गर्ने दिशामा पाठकलाई सक्रिय तुल्याउन भूमिकाको औचित्य हुनुपर्ने हो। सरलरेखीय अध्ययन र आस्वादन क्रममा एकोहोरिएर हिंडिरहेका सुधा पाठक समूहलाई समयसमयमा सम्प्रेषणको वक्ररेखीय अभिव्यक्तिसित परिचित मात्र नगराएर व्यंग्य, विरोध, स्वरकल्पना, विसंगति, चिद्वैषम्य, विपर्यस्त र विरोधाभासहरूसित लुकामारी खेलाउने कृतिहरूसित पाठकहरूलाई जम्काभेट गराउन पर्ने परोक्ष आवश्यकता राम्रा पुस्तकका भूमिकामा रहन्छ।”

तर म भन्छु, यो मेरो भूमिका होइन। खालि नवराज सुब्बाको, उहाँको लेखनको सामान्य परिचय वा टिप्पणी मात्र हो।

‘मनको मझेरी’ शीर्षकमा यहाँ निबन्ध मात्र छैन, तर उहाँको यी बीस निबन्धहरूलाई “मनको मझेरी” अथवा मनका कुरा, विचार, मनरूपी घरको खाली मध्यभाग अथवा आत्मिक सन्देश वा प्रस्तुति भन्न रूचाउँछन्। ‘नेपाली वृहद् शव्दकोश’मा मझेरी भन्नाले ‘घरभित्र चुलो, ओछ्यान र कोठाका अतिरिक्त खाली छोडिएको बीचको ठाउँ, छिंडीको भुइँ’ लेखिएको छ। वास्तवमा मझेरी झर्रो शव्द हुनुपर्छ।

यसैबीच नेपाली आत्मपरक तथा संस्मरणात्मक निबन्धको सानु इतिहास पनि उल्लेख गर्ने लोभ लाग्यो। वि.स.१८३१ मा पृथ्वीनारायण शाहको “दिव्योपदेश”लाई पहिलो साहित्यिक

निबन्ध भन्नुपर्ने हुन्छ। यसअघिका भास्वती, गगनीराजको यात्रा, खण्डखाद्य, बाजपरीक्षा, ज्वरोत्पति चिकित्सा, प्रायश्चित प्रदीपजस्ता गद्यात्मक कृतिहरू पनि थिए। पूर्वीय साहित्य अर्थात् संस्कृत कालावधिमा आज हामी जुन निबन्ध भन्छौं, त्यसको स्वरूप देखिदैन। यद्यपि हिन्दी, बङ्गला र चिनियाँ साहित्यहरूमा निबन्धको राम्रो इतिहास तथा विकास पढ्न पाइन्छ।

वास्तवमा, आजको निबन्धको स्वरूप वा संरचनाको अनुपातमा फ्रान्सेली साहित्यकार मिखाइल द मोन्टेगलाई यसको जन्मदाता मानिएको छ। सन् १८५० मा अर्थात् आजभन्दा १५० वर्षभन्दा अघि नै झ्ककबष्क नामक पुस्तक प्रकाशित भएको थियो, जसमा आत्मपरक गुणहरू रहेका थिए। यस्तै ब्रिटेन फ्रान्सिस बेकनले आधुनिक निबन्धको सूत्रपात गरे। बेकनको निबन्धहरूमा भौतिकशास्त्रका सूत्रहरूलाई व्याख्यात्मक– सम्बद्धता दिंदै वस्तुपरकताले प्रवेश गरेको पाइन्छ। प्राध्यापक राजेन्द्र सुवेदीले नेपाली निबन्ध साहित्यको काल विभाजन, नेपाली समहित्यको कोशमा यसरी गरेका छन्–

(क) पृष्ठभूमिकाल– वि.स. १९५८ मा गोरखापत्रको प्रकाशनसम्म।

(ख) प्राथमिककाल– वि.स. १९७४ मा चन्द्रिका पत्रिकाको प्रकाशनसम्म।

(ग) माध्यमिककाल– वि.स. १९७४ देखि वि.स.१९९१ सम्म 'शारदा' पत्रिका प्रकाशन नहुन्जेलसम्म।

(घ) आधुनिककाल– वि.स. १९९१ देखि प्रारम्भ।

नेपाली निबन्ध–साहित्यको इतिहासमा कोशेढुङ्गाका रूपमा 'गोरखापत्र'(वि.स.१९५८) को प्रकाशन नै रहेको छ। वाराणसीबाट प्रकाशित 'माधवी' (वि.स.१९६५) र 'गोर्खाली'

(१९७२) ले निबन्ध साहित्यको विकासमा निश्चय नै महत्वपूर्ण योगदान दियो। वि.स.१९७४ मा खर्साङ्गबाट 'चन्द्रिका' पत्रिकाको प्रकाशनपछि आत्मपरक निबन्ध लेखनको प्रारम्भ भयो। यस्तै बनारसबाट प्रकाशित 'गोर्खासंसार' (१९७९) र दार्जिलिङ्गको 'साहित्यसम्मेलन' जस्ता पत्रिकाहरूको माध्यमबाट नेपाली निबन्ध साहित्यले अझ खारिने अवसर पायो। 'शारदा' (१९९१) सँगै शुरू भएको आधुनिककालमा निबन्ध–विधाले विविध पक्षँ् र विषयमा विविध प्रस्तुति गर्दै यसको विषयवस्तु, आकार, कला, भावना, अभिव्यक्ति आदिमा सन्तुलित र परिमार्जित उदाहरण प्रस्तुत गऱ्यो। निबन्ध–लेखनमा वि.स.२००७ सालको क्रान्तिपछि यौटा बृहत जमात नै अगाडि आयो। यस अघिका संबद्ध केही लेखकहरूमा परिमार्जन र परिष्कृतता आउनाकासाथै प्राचीन परम्परालाई भत्काउन लागियो। वि.स.२०२० पछि आजसम्मको लगभग चार दशकमा निबन्ध कथा भयो, यात्रा भयो, नियात्रा भयो। अझ यो कविता भयो, संस्मरण भयो, समाचार बन्यो, नयाँ मूल्य र मान्यताकासाथ धेरैअगाडि बढ्यो। नेपाली बिन्धलाई यस खुल्ला र स्वतन्त्र अन्तर्राष्ट्रिय राजमार्गमा ल्याउने केही सशक्त निबन्धकारहरूको नाम लिंदा कृष्णचन्द्रसिंह प्रधान, कमलमणि दीक्षित, जनकलाल शर्मा, रमेश विकल, तारानाथ शर्मा, भैरव अर्याल, शंकर लामिछाने, माधव पोखरेल, गोविन्दराज भट्टराई, गणेश रसिक, युवराज नयाँघरे आदि पुराना र युवा सशक्त हस्ताक्षर वा हस्तीहरूको नाम नलिनु अन्याय हुन्छ। यी लगभग पचास हस्ताक्षरहरूको भीडमा अर्थात लामो यात्रामा, आफ्नो केही निजात्मक, संस्मरणात्मक, यात्रात्मक, सूचनात्मक, संवेदनात्मक र विचारात्मक निबन्ध लिएर कवि नवराज सुब्बा सडकमा उभिएका छन् – 'मनको मझेरी' लिएर।

मेरा मानसमा आएका ती निबन्धकारहरूको सूची मलाई अपूरो लाग्यो। लेखिहालें– यस सम्बन्धमा कुनै आधिकारिक व्यक्ति म होइन। यसैले आजभोलि निस्केका गहकिला साहित्यिक पत्रिकाहरू गरिमा, मधुपर्क, रचना, अभिव्यक्ति, शारदा, सुगन्ध, मातृभूमि, गुञ्जन, अक्षर आदि राजधानीभित्र र बाहिरबाट प्रकाशित हुने पत्रिकाहरू पल्टाएँ। ती पत्रिकाहरूमा आजका चर्चित ख्यातिप्राप्त सुयोग्य र सफल निबन्धकारहरूको सूची यसरी थपें– यसलाई रेन्डम सेम्प्लिङ भनौं। ती स्वनामधन्य लेखकहरू हुन्– डा.लक्ष्मणप्रसाद गौतम, तेजेश्वरबाबु ग्वंग, श्रीओम श्रेष्ठ 'रोदन', रमेश गोर्खाली, जीवनाथ धमला, भीष्म उप्रेती, डा.तुलसी भट्टराई, डा.खगेन्द्रप्रसाद लुइँटेल, हरिहर खनाल, निमेष निखिल, कृष्ण धरावासी, गोविन्द गिरी 'प्रेरणा' आदि इत्यादि। यो सूची अझ लामो हुनसक्छ।

'मनको मझेरी'भित्रका निबन्धहरूलाई संक्षेपमा यसरी प्रस्तुत गर्छु। आफ्नो 'मनको मझेरी' मा आफ्नो पाठकवृन्द र लेखकहरूलाई सुब्बाले यसरी स्वागत गरेका छन्–

"मनको भारी कति मनमा एक्लै बोकेर हिँड्नु कसैलाई बाँड्न पाए पनि हुन्थ्यो कि भन्ठानेर सायद लेखियो। घटना, भावना र अनुभूति जो अरूलाई पनि प्रिय तथा उपयोगी लाग्न सक्छन्।"

"अक्षरै अक्षरले बुनेका पीरामा बसेर पाठकसामु प्रस्तुत हुन पाउँदा मलाई कताकता न्यानो अनुभूति पनि भइरहेको छ। नढाँटिकन पाठकसामू सिधै आफूलाई पस्कन पाउँला अलि अप्ठेरो लागे पनि लेखनमा इमान्दार र जिम्मेवार भएर प्रस्तुत हुन पाउँदा मलाई साँच्चै सन्तुष्टि पनि मिलेको छ।"

"सिर्जनाले लेखकलाई मात्र सन्तुष्टि दिएर पुग्दैन। पाठकलाई

समेत सन्तुष्टि र सिङ्गो समाजलाई पनि यसले योगदान दिन सक्नुपर्दछ भन्ने मान्यता मैले पनि राखेको छु।”

“म कति सफल भएँ? पाठक, समालोचकले नै मूल्याङ्कन गर्नुहुनेछ। सुझाव र सल्लाहलाई म एउटा साहित्यको विद्यार्थीका हैसियतले सदा स्वागत गर्नेछु।”

अर्थात्– नवराज सुब्बाका मानसिकता अर्थात् अनुभूति र अनुभव यी निबन्धमा छन्।
अर्थात्– यी निबन्धहरू पाठकीय समवेदना र सन्तुष्टिसँग गाँसिएका छन्।
अर्थात्– यी निबन्धहरू समाजका लागि उपयोगी र उत्प्रेरक छन्।
अर्थात्– यी निबन्धहरूको साँचो मूल्याङ्कनकर्ता विज्ञ पाठक नै हुन्। आफ्नो कुनै पनि टिप्पणीका लागि उनको ढोका संधै खुल्ला र स्वागतपूर्ण छ।

उनका यी पाँच स्वीकारोक्ति अर्थात् आत्म–निवेदनहरू छन्। पहिलो निबन्ध श्रवण क्षमता नभएका बालबालिकाले आफ्नो सोचाइमा भोलिको नेपाल अर्थात् नयाँ नेपालको चित्र प्रतियोगिताबाट तिनको प्रतिभा र भावनाबाट अभिभूत भएको निबन्ध–रिपोर्ताज हो– ‘नयाँ नेपालको चित्र’। अपाङ्गलाई दया होइन अधिकार चाहिएकोमा जोड दिंदै लेखकले शान्तिको कामना, वुद्धत्वको खोजीमार्फत् भोलिको नेपालको परिकल्पना गरेका छन्।

असल र प्रभावशाली तस्वीर अर्थात् फोटो पनि साहित्य हो, यो कविता जस्तै मीठो र महाकाव्य जस्तै गहन लागेको छ लेखकलाई कुनै आर्ट–ग्यालरीको प्रदर्शनी हेरेपछि। एक दशकको द्वन्द्वको अर्थात् युद्धको प्रभाव देखाउनु चित्रप्रदर्शनीको उद्देश्य थियो। हरेक चित्रमा अत्यन्त मार्मिक पीडापूर्ण अभिव्यक्तिहरू पनि छन्। जस्तो कि– ‘हे ईश्वर! मृत्यु कुरेर बसेकी मलाई नलगेर नलानु पर्नेलाई लग्यौ, बिना कसुर मलाई किन यत्रो सजाय दियौ भगवान!’। ‘तस्वीरमा पोखिएका कविताहरू’मा युद्धले जन्माएका विभत्स दृश्यहरू मात्र छैनन्, सुब्बाको कवित्व पनि छ।

‘क्रान्तिको मूल्य’ कविताका यी हरफ मर्मस्पर्शी लाग्छन्–

> अझै कति अञ्जुली सिंदुर समय र हृदय
> लिलाम भएपछि मात्र चुकाउला मान्छेले
> क्रान्तिको मूल्य।

‘श्रद्धाञ्जली एउटी लिम्बूनीलाई’ पढेपछि मेरा आँखाहरू रसाए। ती अविवाहिता लिम्बूनी मानवीयताका प्रतीक भएर म भित्र उदाइन्। सुब्बाको यो यथार्थ सस्मरण हो र तिनलाई साँचो श्रद्धाञ्जली हो। लेखकको यौटै वाक्य निबन्धको गहिराईलाई, पीडालाई बुझ्न समर्थ बनाउँछ– “बाँचुन्जेल विद्यार्थीसित पौंठेजोरी खेल्नुपर्ने नियति रहेछ कठै साइँलीबजूको”।

आमाको यौटा रूप अथवा मातृशक्तिको यौटा पीडादायी पक्षको उद्घाटन हो–‘आमाका रूपहरू’। धेरै पहाडी जिल्लाहरूमा मोटर पुग्न सकेका छैनन् र ढुवानीका माध्यम आज पनि भरियाहरू नै छन्। यौटी भोटे थरकी महिला कुस्त भारी बोकेर हिंडिरहेकी छे, उसको छोरा रूँदै पछि लागिरहेछ। बाँच्नुको, जिन्दगीको यहाँभन्दा कडा संघर्ष अरू के हुनसक्छ? तिनी सबै नेपाली नारीको प्रतीक छिन्। आजको नेपालमा महिलाहरूमाथिको सबै किसिमको शोषण, अन्याय र अत्याचार तथा तिनले भोग्नु परेको पीडाको एक रूपवान अंश प्रस्तुत भएको छ।

महिलाहरूप्रति लेखक धेरै संवेदनशील छन्। ‘तरकारी बेच्ने महिला’ यसको उदाहरण हो। घर–घरमा तरकारी बेच्न आउने महिलाहरू कति दुःख, पीडाले ग्रस्त छन् र ती प्रति हाम्रो सहानुभूति हुनुपर्छ भन्ने लेखकको सादर आग्रह छ।

कवि मात्र होइनन्, निबन्धकार मात्र पनि होइनन्। सङ्गीतका

पारखी र गीतकार एवम् गायक पनि हुन्। 'हाक्पारे सङ्गीत' कुनै लिम्बूको मृत्युमा फलाकिने एक किसिमको मन्त्र वा गीत हो, जोसँग लेखकको गहिरो नाता पनि छ। नेपाली सङ्गीतको क्षेत्रमा ओझेलमा परेको हाक्पारे सङ्गीतको संरक्षण र विकास हुनुपर्ने लेखकको धारणा यस निबन्धमा देखिन्छ।

लेखकको 'गीत–सङ्गीतभित्र देश र जीवन खोज्दै' निबन्धमा देश र जीवन खोजेको, राष्ट्र र राष्ट्रियताप्रतिको आस्था यस निबन्धमा व्यक्त गरेका छन्। गीतप्रतिको स्पष्ट धारणा लेखकले यसरी व्यक्त गरेका छन्– "मायाप्रीतिका कुरा, सुरा–सुन्दरीको बयान, सिद्धान्तका नारा आदि आजकल कला र साहित्यमा अटाइनअटाइ आउने गर्दछन्। तर यसले मात्र जीवनको रथ चल्दैन। जीवन र जगत जगाउने साथै जोगाउने गीत पनि चाहिन्छन्।"

आफ्नो राष्ट्रिय भावनाका केही हरफहरू पनि यस निबन्धमा परेका छन् –

नेपाली नेपाली हामी नेपाली
मधेसी होस् वा जनजाति हामी नेपाली
दलित होस् वा तागाधारी हामी नेपाली।

राष्ट्रको तरल राजनीतिक स्थितिमा लेखकले राष्ट्रिय सार्वभौमिकता र एकताको गीत गाएका छन्।

"जन्तरेसरको टक्करी ट्वाक" लेखकको आत्मसंस्मरण हो। सोधेका प्रश्नको उचित जवाफ नदिंदा टाउकोमा पिट्ने प्रचलनलाई टक्करी–ट्वाक भनिन्थ्यो र यस दण्डमार्फत जन्तरेसरलाई आफ्नो संस्मरणमा उभ्याएका छन्। यस संस्मरणमा उनले आफूलाई यसरी स्पष्ट पारेका छन्। 'जे होस्, आज मलाई गरिबको पक्षमा कमसेकम उभिन, केही गर्न, बोल्न र लेख्न नै आनन्द लाग्छ।'

'ती एक जोडी परेवा' पनि संस्मरण नै हो। कुनै चाडपर्वका बेला कान्छो छोराको बिरामीको कारण बूढासुब्बामा एकजोडी परेवा चढाउने भाकल उनको श्रीमतिको रहेकोमा लेखक पशुपंक्षीलाई भोग दिनुभन्दा परेवाको एक जोडी मन्दिर वरिपरि छाडिदिने प्रस्ताव राख्छन्। अन्धविश्वासी परम्परामाथि व्यङ्ग्य गर्दै लेखकले जीवजन्तुको संरक्षण गर्नुपर्छ भन्ने कुरामा जोड दिंदै प्रतीकात्मक रूपमा खालि एक हरफ लेखेका छन् – 'मेरो कल्पनाको आकाशबाट पनि परेवा कसैले लग्यो कि!'

नेपाली साहित्यमा कथा, उपन्यास र निबन्धमार्फत आफ्नो स्पष्ट पहिचान बनाउन समर्थ कृष्ण धरावासीको एक निबन्ध "बालक हराएको सूचना"बाट आफू प्रभावित भएको संस्मरण हो। आफूलाई कुनै दिन बालक हराएसरह हराउन सक्ने दार्शनिक पक्ष पनि यसमा सम्बद्ध छ। साहित्य र साहित्यकारको लेखनले कसैको मानसिकतामा परिवर्तन ल्याउने, क्रान्तिकारी भूमिका खेल्ने कुरा पनि यसमा व्यक्त भएको छ।

दाहाल यज्ञनिधि र जदौ एक अर्काबीच पर्यायवाची भइसकेका छन्। उनको जदौ सम्बोधन, प्रखर वाचनशिल्प र ओजपूर्ण आवाज नेपाली जनमानसमा निश्चय नै लोकप्रिय छ। दाहालमार्फत् रेडियो नेपालमा आफूले कविता वाचन गरेको कुराको रोचक संस्मरणात्मक लेख हो– जदौ दाहाल यज्ञनिधि।

लेखक स्वयम् साहित्यकार भएकाले स्रष्टा र साहित्यप्रति उनले आफ्नो दृष्टिकोण प्रस्तुत गरेका छन्। 'साहित्यकार इमान्दार हुन्छ' लेखकको इमान्दार प्रस्तुति हो।

'स्रष्टाप्रति समाजको अपेक्षा' पनि लेखनसँग सम्बद्ध निबन्ध हो। व्यक्तिको प्रतिभा, लगन, साधना र इमान्दारीप्रति सचेत गराउँदै सकारात्मक दृष्टिकोण राख्ने सल्लाह लेखकले स्पष्ट रूपमा प्रस्तुत गरेका छन्।

'थुतुनो र मुतुनो जोगाउनु' भन्ने नेपाली उखानलाई लेखकले आजको मोवाइल वा टेलिफोन संस्कृतिको कुरा 'टेलिफोन र थुतुनो' मा प्रस्तुत गरेका छन्। टेलिफोनमा व्यवहार गर्दा विनम्र, छोटो र स्पष्ट कुरा राख्नुपर्ने सल्लाह दिंदै लेखकको संस्मरणात्मक निबन्ध हो 'टेलिफोन र थुतुनो'।

पशु–पंक्षीप्रतिको स्नेहभाव र संवेदनशीलताको सवल पक्षपाती लेखकले महात्मा गान्धी र मेनका गान्धीकन आदर्श–पक्षहरूलाई सरल र प्रभावकारी ढंगले प्रस्तुत गरेका छन्–'पशुप्रति मानवीय संवेदनशीलता' मा। पशुपंक्षीमा पनि मानिसलाई झैं पीडाबोध गराउने स्नायुकोष हुने प्रमाणित गर्दै लेखकले आफू माछा–मासु नखाने 'भेजेटेरियन' पक्ष यस निबन्धमा प्रस्तुत भएको छ।

झापाको चन्द्रगढीमा रहेको 'लेखनाथ पुस्तकालय' को विषयमा आफ्नो विचारहरू प्रस्तुत गर्दै लेखकले नेपाली साहित्यका वर्तमान गतिविधिका केही सन्दर्भहरूलाई पनि गाँसेका छन्। जस्तो कि नारी हस्ताक्षरको कमी, साहित्यिक कृति उपहार पाएपछि मात्र पढ्ने बानी र पुस्तकालयको महत्ता 'पुस्तकालय' मा प्रस्तुत भएको छ।

विदेशको नियात्रा विषयक संस्मरण हो –'बैंकक शहरमा कोइलीको स्वर' यो संस्मरण निकै रोचक र अविस्मरणीय छ। विरामीलाई पुऱ्याएको सहयोग, अन्धी महिलाको गीत, पाकेटमारी आदि संगै बैंकक शहरमा सुनेको कोइलीको आवाजको प्रस्तुतिले त्यहाँको खास झझल्को दिन्छ। अरूहरूले बैंककलाई हेर्ने र भोग्ने दृष्टिकोण भन्दा सुब्बाको भोगाई विल्कूल फरक देखिन्छ।

यस पुस्तकको अन्तिम रचना हो– 'भोगाईको अनुभूति र प्राप्ति' यसमा उनले आफ्नै विषयमा आफूलाई प्रस्तुत गरेका छन्। आफूलाई केही साथीहरूले शिक्षण संस्थामा प्रशिक्षक बन्नुपर्ने, केहीले पत्रकार र केहीले साहित्यकार बन्नुपर्ने

प्रसङ्गहरूलाई लेखकले यहाँ जोडेका छन्। एकजना त्बभिलतभम साधक जुनसुकै विषयमा पनि पूर्ण दक्षताकासाथ ख्याति कमाउन सक्छ भन्ने कुराको उदाहरण खोज्न कहीँ जानु पर्दैन, स्वयम् नवराज सुब्बा नै हुन्।

'भोगाईको अनुभूति र प्राप्ति' स्वयम् उनको भोगाई हो। कवितामा यसरी आफूलाई स्पष्ट पारेका छन्–

बस् एउटा बाटो भए पुग्छ
केवल हिंड्ने बाटो भए पुग्छ।

'स्मृतिका छालहरूमा प्रधानबा' यौटा साह्रै मीठो र रहरलाग्दो छ। यो संस्मरण आजभन्दा २० वर्षअघि तेह्रथुमको मोराहाङ स्वास्थ्यचौकीमा जागिर खाएको बेला परिचय भएका रोमाण्टिक व्यक्तित्व दुर्गबहादुर खापुङ अर्थात् प्रधानबाको सम्झनाले लेखिएको यस स्मृति–श्रद्धाञ्जलीभित्र अप्रत्यक्ष रूपमा मानवीय संवेदना गाँसिएको छ। विश्वमा कहिल्यै नाश नहुने, समाप्त नहुने विषय हो– मानवीयता, मानव–अधिकार, प्रजातन्त्र वा लोकतन्त्र र यौन–सम्बन्ध। सुब्बाले भेटेको, प्रभावित भएको उदार र हँसिला प्रधानबाहरू भेट्न अहिले कठिन भएको यथार्थ पनि यसमा गाँसिएको छ।

'तालु' मा 'तालुमा आलु फल्छ' महात्म्यको अर्थहीनताबारे केही तालु खुइलेहरूको दुःखद् स्मृतिहरू रहेका छन्। यस निबन्धमा हाँस्य–व्यङ्यको राम्रो प्रस्तुति छ र भाग्यवादीहरूलाई कर्मवादी जीवनशैली बनाउन लेखकले सकारात्मक सन्देश दिएका छन्।

यी बीस निबन्धहरूको सँगै नवराज सुब्बाका आफ्नो केही अमूल्य विचार वा समसामयिक वाणीहरू पनि छन्। जीवन र साहित्य, मान्छे र पशुपंक्षी, विश्वास र अन्धविश्वास, आशा र

निराश, अनुभूति र पीडाबोध आदि विभिन्न विषय र प्रसङ्गहरूमा लेखक आफैले आफ्नो केही सिद्धान्त, विचार वा सामयिक दृष्टिकोणहरू प्रस्तुत गरेका छन्। यी कोटेशनहरूलाई म यसरी गाँस्छु–

- अपाङ्गलाई दया होइन, अधिकार चाहिएको छ। (नयाँ नेपालको चित्र)
- तस्वीर पनि साहित्य हो। (तस्वीरमा पोखिएका कविताहरू)
- तस्वीर एउटा कविता जस्तै मीठो र महाकाव्य जस्तै गहन हुनसक्छ। (तस्वीरमा पोखिएका कविताहरू)
- वास्तवमा जिउनलाई मानिस बेलाबेला कति कठोर बन्नु पर्दोरहेछ। (श्रद्धाञ्जली एउटी लिम्बूनीलाई)
- फूलमा पलाएका काँडाका अर्थ पनि बुझ्दैछु। (श्रद्धाञ्जली एउटी लिम्बूनीलाई)
- जिउनलाई मित्रैमित्रले मात्र हुँदैन, दुस्मन पनि चाहिन्छ। (गीतसङ्गीतभित्र देश र जीवन खोज्दै)
- मायाप्रीतिका कुरा, सुरा–सुन्दरीका बयान, सिद्धान्तका नारा आदि आजकल कला र साहित्यमा अटाइ–नअटाइ आउने गर्दछन्। तर यसले मात्र जीवनको रथ चल्दैन। जीवन र जगत् जगाउने साथै जोगाउने गीत पनि चाहिन्छन्। सकारात्मक सोच, सद्भाव र समृद्धि बढाउने खालका साहित्य आजको आवश्यकता हो। (गीतसङ्गीतभित्र देश र जीवन खोज्दै)
- जे होस्, आज मलाई गरिबका पक्षमा कमसेकम उभिन, केही गर्न, बोल्न र लेख्न नै आनन्द लाग्छ। (जन्तरेसरको टक्करी–ट्वाक)
- मेरो कल्पनाको आकाशबाट पनि परेवा कसैले लग्यो

कि! (ती एकजोडी परेवा)

- जूनको छायाँले मात्र मन कहाँ शीतल हुन्छ र! (धन्यबाद धराबासी)
- जीवनको आकासमा निराशाका बादल नदेख्ने मानिस सायदै होलान्। (जदौ दाहाल यज्ञनिधि)
- मनभित्रको भावनाको संसार बेग्लै हुन्छ। (जदौ दाहाल यज्ञनिधि)
- देशको लागि इमान्दारीपूर्वक बोल्ने, लेख्ने फूर्सद साहित्यकारलाई मात्र हुन्छ। (साहित्यकार इमान्दार हुन्छ)
- सदा प्रतिपक्ष्ँको रूपमा मात्र साहित्यलाई उपयोग गर्नु अलि पूर्वाग्रही सोंच हो। (साहित्यकार इमान्दार हुन्छ)
- प्याजको पत्र खोल्दा केही हात नलाग्ने, तर खाँदा संधै स्वादिलो प्याज झैं लाग्ने रचना लेख्न र पढ्न नै मनपर्छ, किन? (स्रष्टाप्रति समाजको अपेक्षा)
- मर्ने बेलामा पनि सर्जक राम्रा सिर्जना गरिरहेकै हुन्छ। कुनै सिर्जनाको मूल्याङ्कन सर्जकले भन्दा पाठकले नै राम्ररी गर्नेछन् भनेर विश्वास गर्नुपर्दछ भन्ने मेरो मान्यता छ। (स्रष्टाप्रति समाजको अपेक्षा)
- स्रष्टाले संधै राम्रो मात्र लेख्छु वा लोकप्रिय रचना मात्र लेख्छु भन्ठानेमा यसले ऊ आफैलाई र पाठकलाई अन्याय हुनजान्छ। (स्रष्टाप्रति समाजको अपेक्षा)
- साहित्य सिर्जनामा पनि सुन्दर विचार, दृष्टिकोण र अनुभव चाहिन्छ। (स्रष्टाप्रति समाजको अपेक्षा)
- पशुपंक्षीमा पनि मानिसलाई झैं पीडाबोध गराउने स्नायुकोष हुन्छन्। (पशुप्रति मानवीय संवेदनशीलता)
- युग हाँक्ने पथप्रदर्शकको भूमिका पनि खेल्दोरहेछ पुस्तकालयले। (पुस्तकालय)

- सङ्गीतमा अन्तरआत्माको गहिराई छुने शक्ति छ। (बैंकक शहरमा कोइलीको स्वर)
- सात रङ्गबाटै अन्य रङ्ग पनि जन्माउन सकिन्छ भन्ने संभावना बोक्ने उत्तरआधुनिक चेतनाको स्वर हो। (भोगाईको अनुभूति र प्राप्ति)

यी बीस निबन्धहरूको अध्ययनपछि नवराज सुब्बाका विशेषता, गुण वा उपलव्धिहरू यी देखिन्छन्।

- (क) सुब्बाको भाषा सहज र सरल छन्। आफ्नो कुनै पनि कुरा स्पष्ट र निर्भिक रूपमा प्रस्तुत गरेका छन्।
- (ख) सुब्बाले लिएका विषयहरू समसामयिक र प्रासाङ्गिक छन्। आजको नेपाल र विश्वले भोगिरहेका, देखिरहेका प्रसङ्गहरू उनका निबन्धका विषयहरू बनेका छन्।
- (ग) सबै निबन्धहरूमा केही न केही रूपमा विविधता छन्, अर्थात् संस्मरण, आत्मवृत्तान्त, रिपोर्ताज, फिचर, समाचारमूलक लेख, कविता, कथाहरूको समष्टिगत फूलबारी जस्तो छ कुनै पनि निबन्ध।
- (घ) प्रत्येक निबन्धमा अनुभव मात्र छैन, अनुभूति पनि छ, स्वीकारोक्तिका साथै साश्वत सत्य–तथ्यहरू पनि छन्।
- (ङ) नेपाली उखान–टुक्काहरूको आवश्यकताअनुसार प्रयोग भएको छ।
- (च) लेखक पूर्वी नेपालको दूर्गम जिल्लाका हुनाले पहाडी जनजीवन, सामाजिक रीतिथिति, बानी–ब्यहोरा आदि राम्ररी सम्प्रेषण भएका छन्।
- (छ) कुनै पनि निबन्धमा कृत्रिमताको गन्ध आउँदैन, सबैमा स्वभाविकता छ, प्राकृतिक संवेदना छ अनि

रचनात्मक सोंच छ।

- (ज) यी निबन्धहरूले निबन्धको परम्परागत परिभाषालाई प्रत्यक्ष वा अप्रत्यक्ष तोडेका छन्।
- (झ) यिनमा पहाडी खोलाको बहाव छ, विचारमा खुल्ला आकाश छ, मानवीयताको सुन्दर पक्ष छ।
- (ञ) यी निबन्धहरू पत्रकारिताबाट जानीनजानी प्रभावित छन् अर्थात् पत्र–पत्रिकाको स्तम्भलेखन वा तिनमा छापिएका र छापिने स्वरूपका छन्। पत्रकारिता र साहित्यको घनिष्ट सम्बन्धलाई सफलतापूर्वक प्रस्तुति गरेका छन्।

यी दस विशेष गुणहरूलाई उल्लेख गरेपछि नेपाली साहित्यका पाठकहरूलाई म राम्रो होमवर्क दिन्छु– तपाईहरू अत्याधुनिक नेपाली निबन्ध साहित्यमा नवराज सुब्बालाई कहाँनेर ठाउँ दिनुहुन्छ? इतिहासको कुन मोडमा लगेर उभ्याउनुहुन्छ?उहाँलाई राम्रो कवि मात्र मान्नु हुन्छ कि राम्रो निबन्धकार पनि!...। म यसको जवाफको प्रतीक्षामा छु।

पर्खनुहोस्– मैले भन्नैपर्ने कुराहरू बाँकी छन्। त्यो भन्दा अघि विशिष्ट आख्यानकार इन्द्रबहादुर राईका यी वाक्यहरू म उल्लेख गर्छु –“जसरी राजनीतिमा अहिले समावेशी विकासको कुरा आएको छ, त्यसैगरी साहित्यमा पनि यो पद्धति स्वीकार्य बन्न सक्नुपर्छ।”

अनि अर्का प्रसिद्ध समालोचक र आख्यानकार डा.गोविन्दराज भट्टराईका यी वाक्यहरू सापट लिन्छु। “यसरी हेर्दा मानिसले युगलाई आकार दिन नसक्दो रहेछ। बरु युगले उसको सोंचलाई आकार दिनेरहेछ। हामी सबै युगसँगै बगेका छौं, कोही–कोही मात्र युगभन्दा माथि, तल, पर भएका छन् र तिनीहरूले दुःख

पाएका छन्।"

म अन्त्यमा भन्छु– नवराज सुब्बा दक्ष वा राम्रा कवि मात्र होइनन्, राम्रा निबन्धकार पनि हुन्। उनी राम्रा प्रशासक मात्र होइनन् राम्रा मानवतावादी पनि हुन्। राम्रा गीतकार मात्र होइनन् राम्रा गायक पनि हुन्। उनीभित्र सर्वतोमुखी प्रतिभा छ। त्यस प्रतिभालाई हामीले बेलैमा चिनेर कदर गर्न जान्नुपर्छ। अनि उनले आफूभित्रको ऊर्जालाई राम्रो उपयोग गरी साहित्यिक साधना, अध्ययन अनि सिर्जनालाई अगाडि बढाउनु पर्दछ। किनभने असमयमा बुझिएको सत्यको काम रहेनछ (डा.गोविन्दराज भट्टराई)।

त्यो दिन टाढा हुने छैन – उनको सुन्दर सपना उनकै आँगनमा स्वस्थानी ब्रतकथाको नवराजलाई झैं आजको नवराजलाई कुनै साहित्यिक हात्तीले माला पहिऱ्याउन आइपुग्नेछ, सो दिन टाढा छैन। सधन्यवाद!

विराटनगर
मार्ग, २०६४ साल

# “मनको मझेरी” मा स्वागत छ

(प्रथम संस्करण)

कुनै दिन निबन्धसङ्ग्रहका रूपमा यसरी नै प्रकाशित गरौंला भनेर लेख्न थालिएको त थिएन। मनको भारी कति मनमा एक्लै बोकेर हिँड्नु कसैलाई बाँड्न पाए पनि हुन्थ्यो कि भन्ठानेर सायद लेखियो। घटना, भावना र अनुभूति जो अरूलाई पनि प्रिय तथा उपयोगी लाग्न सक्छन्, त्यस्ता लेखनलाई छानेर सानो सङ्ग्रहको रूपमा पाठकसामू राखेको छु– मेरो ‘मनको मझेरी’।

आफ्ना मनका कुरा कसैलाई भन्नसम्म पाउँदा पनि मनै हलुङ्गो हुन्छ, एकप्रकारको आनन्द आउँछ। भनिन्छ दुनियाँ ठूलो छ, तर मनका कुरा सुनिदिने मानिस पाउन गाह्रो छ। मनका कुरा मनमै कति गुम्स्याउनु भनेर कहिलेकाहिँ मझेरीमा ल्याएर मन खोल्दछु। अक्षरै अक्षरले बुनेका पीरामा बसेर पाठकसामु प्रस्तुत हुन पाउँदा मलाई कता कता न्यानो अनुभूती भइरहेको छ। नढाँटिकन पाठकसामू सिधै आफूलाई पस्कन पाउँला अलि अप्ठेरो लागे पनि लेखनमा इमान्दार र जिम्मेवार भएर प्रस्तुत हुन पाउँदा मलाई साँच्चै सन्तुष्टि पनि मिलेको छ।

मनका कुरा पाठकसामू राख्ने कला विभिन्न होलान्। आफू नै मुख्यपात्र भएर घटनाका

हुबहु विवरण राखिने तथा त्यसताका प्राप्त अनुभूति र अनुभवलाई पनि पाठकसामू राख्न सकिने सजिलो विधा निबन्ध नै हो। मैले भोगेका तथा देखेका घटनाको साक्षी म नै हुँ। मैले इमान्दार भएर कुरा बक्नु पर्दछ भन्ठानेर पनि निबन्ध नै लेख्न खोजें। जसलाई मैले निबन्ध ठानेको छु। निबन्धका परम्परागत परिभाषा र स्वरूपसँग यी मिल्न वा नमिल्न पनि सक्छन्। त्यसैले पनि निर्धक्कपूर्वक मैले यसलाई निवन्ध नै भन्न चाहें।

वास्तवमा, निबन्धसित मेरो लामो साइनो छ। मैले तीसका दशकमैं विद्यालयस्तरमा निवन्ध प्रतियोगितामा सहभागी भई पूर्वाञ्चल क्षेत्रीयस्तरमा पुरस्कृतसमेत भएको थिएँ। तर पनि लेखनमा निबन्धकै पुस्तकाकार कृतिका रूपमा निकाल्ने मेरो आँखा खुलेन। पत्रपत्रिकामा निबन्धलगायतका मेरा लेखहरू प्रकाशित भएको देखेर बरिष्ठ आख्यानकार श्री परशु प्रधानले एउटा निवन्धसङ्ग्रह प्रकाशित गर्ने जुन सल्लाह दिनुभयो त्यसका लागि म उहाँप्रति आभार प्रकट गर्दछु। आफ्ना लेखनका लामो अनुभव र पृष्ठभूमिमा उभिएर अत्यन्त लगनशीलतापूर्वक मलाई उहाँका भूमिकामार्फत पाठकसामू शुभकामनासहित उद्धाटित गरिदिनु भएकोमा म उहाँलाई मुरी मुरी धन्यवाद दिन आफ्नो कर्तव्य ठान्दछु।

पुस्तक प्रकाशन गर्ने क्रममा सुझाव सल्लाह दिइ सहयोग गरिदिनुहुने साहित्यकारहरू विवश पोखरेल र मिनकुमार श्रेष्ठ ‘नवोदित’ एवम् आवरणको कला सिर्जना गरिदिनुहुने साहित्यकार रमेश पौडेललाई हार्दिक धन्यवाद ंिदन चाहन्छु।

सिर्जनाले लेखकलाई मात्र सन्तुष्टि दिएर पुग्दैन। पाठकलाई समेत सन्तुष्टि र सिङ्गो समाजलाई पनि यसले योगदान दिन सक्नुपर्दछ भन्ने मान्यता मैले पनि राखेको छु। यसमा म कति सफल भएँ? पाठक, समालोचकले नै मूल्याङ्कन गर्नुहुनेछ। सुझाव र सल्लाहलाई म एउटा साहित्यको विद्यार्थीका हैसियतले सदा स्वागत गर्नेछु।

धन्यवाद!

नवराज सुब्बा

# विषय–सूची

# (१) नयाँ नेपालको चित्र

सुन्न बोल्न नसक्ने बालबालिकाहरूको सोंचमा नयाँ नेपाल कस्तो होला? जेसीज सप्ताहअन्तर्गत जेठ अन्तिम हप्तामा विराटनगर जेसीजले अपाङ्गहरूको नयाँ नेपाल शीर्षकमा चित्रकला प्रतियोगिता आयोजना गऱ्यो। दुईदर्जन बढी सुन्न नसक्ने सहभागीले प्रतियोगितामा भाग लिए। एउटा नौलो अनि रमाइलो वातावरण सिर्जना भयो त्यो कार्यक्रममा। त्यहाँ उपस्थित फरक क्षमताका बालबालिकाको प्रतिभा तथा भावना देखेर म मनमनै गदगद् भएँ।

प्रतियोगितामा सान्त्वना पुरस्कार पाउने जशोधरा साहको चित्रमा हाँस्दै गरेको बुद्धको चित्र थियो। उनको चित्रमा हाँस्दै गरेको बुद्धको मुस्कानको अर्थ हामीले धेरै किसिमले लगाउन सक्दछौं। यस्तै तृतीय पुरस्कार प्राप्त गर्ने राजकुमार भगतको चित्रमा नेपाली सेना र माओवादी सेना हात मिलाउँदै गरेको चित्र छ। दोश्रो हुने दीपेन्द्र सहनीको चित्रकलामा क्यानभासै ढाक्ने बुद्धको अनुहार छ अनि हिमाल पहाड र तराई छ। तर बुद्धका आँखाबाट तरर आँशु चुहेको छ। चित्रले नेपालको बर्तमान स्थितिको चित्रण गरेको छ। प्रथम हुने सीसम श्रेष्ठको चित्रकलामा माथिपट्टि लहरै हिमाल छन्। सगरमाथामा फर्फराइरहेको नेपालको झण्डा छ। निलो नदी हरियो पहाड पहेंलो तराई छ। आठ दलका झण्डा लहरै फर्फराइरहेका छन्। प्रतियोगिताका निर्णायक हरिबहादुर श्रेष्ठले परिणाम घोषणा गर्नुभयो। प्रतियोगीका सबै चित्रले सबै मिलेर देश बनाउने आकांक्षा बोकेको देखियो र शान्तिको सन्देश प्रखर रूपमा प्रकट गरिएको पाइयो।

यसबेला जेठको घाम र कामको धपेंडीको थकाई मार्न मन

लाग्या'थ्यो। झापाबाट विराटनगर लागें। विराटनगर जेसीजका महासचिव कैलाश खाकी श्रेष्ठले फोन गर्नु भो– "भोलि दिउँसो अपाङ्गहरूको चित्रकला प्रतियोगिता छ, प्रमुख आतिथ्य ग्रहण गरिदिनु हुन्थ्यो कि!" फोनमा तुरुन्त जवाफ दिनुपर्ने भो। छोटो अवधिमैं धेरै कुरा सम्झें एकातिर थकाइले गाँजेको थियो अर्कातिर अपाङ्ग बालबालिका सहभागी भएको कार्यक्रम त्यो पनि जेसीजको निमन्त्रणा। मैले अस्वीकार गर्न सकिन। यसको खास कारण के लाग्छ भने मैले अपाङ्गका लागि खास केही गर्न सकेकै छैन। मैले दुई चार घण्टा कार्यक्रममा बसिदिँदा उनीहरूको मनोबल तथा हौसला बढाउन मात्र सकें भने पनि मेरो उपस्थितिको उपादेयता हुनेछ। मेरो थकाई गौण थियो कार्यक्रमको अगाडि। म सहर्ष सहभागी भएँ निर्धारित समयमा। विराटनगर जेसीजका अध्यक्ष देवेश प्रधानले मलाई भेट्नेसाथ भन्नुभो– "अरु कार्यक्रम जस्तो अपाङ्गको कार्यक्रममा त्यति चमकधमक नहुँदो रहेछ, हेर्नोस् न हामीले बोलाएका धेरै अतिथि आएनन्।"

श्रवणहिन छात्रछात्राहरूको हाउभाउ हेर्दै म मजा लिइराखेको थिएँ। जब उद्घोषकले कार्यक्रम सुरु गरे त्यसबेला छेवैमा उभिएर शिक्षिका सुनिता घिमिरेले सुन्न नसक्नेहरूलाई साङ्केतिक भाषामा इशारा गरिरहनु भएको थियो। मैले नेपाल टेलिभिजनमा प्रसार हुने साङ्केतिक भाषाको समाचार सम्झें, मलाई त्यहाँ उनको दोभाषेको भूमिका देखेर रमाइलो लाग्यो। कार्यक्रमको औपचारिकता पूरा भएपछि चित्रकला प्रतियोगिता सुरु भयो। सप्ताहव्यापी कार्यक्रमका संयोजक जेसी सन्दीपदास श्रेष्ठले सञ्चार माध्यमलाई उक्त चित्रकला प्रतियोगिताको कभर गर्न मोबाइलबाट अनुरोध गरेको पनि त्यहाँ मैले सुनें।

सुन्न नसक्ने सहभागी राजकुमार भगत इशाराबाट बोल्दै थिए सुनिता घिमिरे इशारालाई

हामीले बुझ्ने भाषामा भन्दै थिइन्– "अन्य किसिमका अपाङ्ग साथीहरू पनि भए अझ रमाइलो हुनेथियो। जेसीजले हामी फरक क्षमताकालाई यस्तो मौका दिएर ठूलो गुन लगाएको छ।" यसै क्रममा प्रतियोगिताकी संयोजिका सङ्गीता चौधरीले छोटो सूचना र बन्दको हल्लाले कार्यक्रमलाई केही असर गरेको बताइन्।

वास्तवमा अपाङ्गलाई दया होइन अधिकार चाहिएको छ। उनीहरूको अनुहार पढेर मैले– उनीहरूको लागि आयोजित कार्यक्रममा पनि अन्य कार्यक्रममा झैं सहभागिता जनाइदिन सबैलाई आग्रह गरेको पाएँ। उनीहरूको भावना र कल्पना अरूको भन्दा भिन्न छैन बरू अझ सशक्त छ। कल्पनाको क्षितिज फराकिलो छ। त्यहाँ गहिराई पनि उत्तिकै छ। त्यो भन्दा पनि उनीहरूको चित्रकलामा नयाँ नेपालमा हुनुपर्ने मूलभूत आकांक्षा समेटिएका छन्। चित्रमा कहिँ न कहिँ परेवा छन्। जहाँ बुद्ध नै नायकको रूपमा चित्रित छन्।

हामीले अपाङ्ग ठानेका बालबालिकामा पनि हामी आमनेपालीले खोजेकै शान्तिप्रति उनीहरूमा पनि ऐक्यबद्धता छ सरोकार र उत्तिकै चिन्ता पनि छ। निश्चय नै आज फरक क्षमताका बालबालिकाले चाहेको सुन्दर, शान्त र समृद्ध नेपाल नै नयाँ नेपाल हो।



# (२) तस्वीरमा पोखिएका कविताहरू

**तस्वीर पनि साहित्य हो। तस्वीर साहित्य त अझ जीवन र जगतको सत्य विवरण हो। फोटोग्राफर यसका सर्जक हुन्। यसमा सर्जकले सत्यको विवरण बिना अलङ्कार, प्रतीक वा बिम्ब, आफूले चुनेको पललाई देखेकै रूपमा पाठकलाई सिधै पस्कन्छन्। वास्तवमा कलाप्रेमी वा संवेदनशील सर्जकले कुनै सत्यको संवेदनशील क्षणलाई कलात्मक ढंगले क्यामेरामा कैद गरेर सबै सामु प्रस्तुत गर्दा यसले दर्शक वा पाठकमा कत्तिको प्रभाव पार्दोरहेछ यसको साक्षी म स्वयम् छु।**

तस्वीर एउटा कविता जस्तै मीठो र महाकाव्य जस्तै गहन हुनसक्छ। जति हेरे पनि हेरिरहुँ लाग्ने पर्खालमा टाँसे पनि कसैलाई नबिझाउने आकर्षक सिर्जना हुन्छ कुनै तस्वीर। गत एक मई विदाको दिन थियो। काठमाडौंस्थित आर्ट ग्यालरीमा "लडाइ'मा जनता" नामक फोटो प्रदर्शनी हेर्न मलाई पनि संयोग मिल्यो। 'नेपालय'द्वारा आयोजित प्रदर्शनीमा २०५३ सालदेखि २०६३ सालसम्मका नेपालका युद्धका चुनिएका चित्रहरू राखिएका रहेछन्।

आर्ट–ग्यालरीको भऱ्याङ चढ्दै थिए। भऱ्याङ्गको बीचबाट निकै लामो लाम लागिसकेको रहेछ। पहिले त मलाई कुनै चलचित्र भवनमा चलचित्र सुरू हुनुपूर्व लागेको लामजस्तो लाग्यो र झस्किएँ। लाममा म पनि थपिएँ। लाम ग्यालरीको ढोकातर्फ अघि बढ्दै थियो। ग्यालरीमा पुग्नु अझै निकै थियो। तर ढोका सामुन्ने टाँगिएको एउटा तस्वीरले मलाई टाढैबाट तान्यो। तस्वीरमा एउटी किशोरी डोकोमा घाँस बोकेकी छिन्। एक हातले भारी थाम्न नाम्लो समातेकी छिन् र अर्को हातले अनुहार छोप्दैछिन्। मानौ दुखेको मन कसैले कोट्याएपछि घाँसको भारीभन्दा कैंयौ गह्रौं भारीले थिचिएर एक्कासि भक्कानिएकी छिन्। शायद किच्चिएको मन र आफ्नो

अनुहार एकैचोटि एक्कासि छोप्दैछिन् ती किशोरी तस्वीरमा। उनको विस्मात अनुहार प्रष्ट नदेखिए पनि मुख अलिकति देखिन्छ। क्यामेराले उनको पीडा सुटुक्क चियाउँछ टिप्छ र दर्शकलाई देखाउँछ। जसलाई हेर्दै मन–मनमा तीक्तता र जिज्ञासा बटुल्दै आर्ट ग्यालरीको ढोकातिर अघि बढ्छु– मनमा अनेकथरी गुन्दै।

तस्वीरकी ती किशोरीबारे एक मनले सोच्दछु कतै उनको आमाबा युद्धमा मारिए होलान्। अथवा उनका परिवारका कुनै सदस्य मारिए होलान् आदि इत्यादि। जब म तस्वीरनेर पुग्दछु क्याप्सनमा लेखिएको रहेछ– "यी किशोरी जसको विद्यालयमा पढ्ने उनका साथीहरूलाई लडाकुहरूले अपहरण गरे। त्यो दिन उनी विद्यालय नगएको कारणले अपहरणबाट बचिन्।" मैले अनुमान गरें उनलाई कसैले हालखवर सोध्दाखेरी बोल्दाबोल्दै भक्कानिएकी हुन् ती किशोरी, सायद। वास्तवमा त्यो तस्वीरले मेरो मन कागतीझैं निचोरिदियो।

पछाडिबाट दर्शकको लाइन अघि बढ्दै छ म पनि स्वचालित रूपमा घडीको सुइरो झैं खुट्टा चाल्दैछु। अर्को तस्वीरमा एउटी लडाकु युवतीको तस्वीरले आकर्षित गर्दछ। कुनै दुलहीझैं देखिने सुन्दर युवती घुम्टो ओढेर टुक्रुक्क बसेकी छिन्। गालामा एउटा ठूलो रातो टाटाझैं देखिन्छ। टुक्रुक्क बसेर दा"या काँधमा राइफल अड्याएकी छिन्। मलिन अनुहार लाएर केही सोंचमा डुबेकी झैं देखिन्छिन्। क्याप्सनमा लेखिएको छ– "यी छापामार लडाकु जो अस्वस्थ छिन्।" मलाई पनि उनको सम्भावित स्वास्थ्य समस्याले दर्शकलाई झैं चिन्तित तुल्यायो। फोटो प्रदर्शनीका तस्वीरहरूले दर्शकको मन छोएको प्रष्टै अनुभव गर्दै थिएँ म।

एउटा अर्को तस्वीरमा युद्ध मैदानमा छरिएका लासमा घोप्टो परेकी एक महिलाको तस्वीर हेरेर मलाई सारै नरमाइलो लाग्यो। एकजना प्रहरीकी पत्नी आफ्ना मृत पतिको छातीमा आफ्नो शिर राखेर रूँदैछिन्। यसैबेला मैले कल्पना गरें सायद उनी भन्दैछिन् – "प्रिय मलाई छाडेर कहाँ गयौ म पनि तिमीसँगै जान्छु ..." छेवैको अर्को तस्वीरमा हेलिकप्टरको चक्कानेर घोप्टो परेर रूँदै गरेको उनकै अर्को तस्वीर छ। फोटोको क्याप्सनमा लेखिएको छ "आफ्ना दिवंगत पतिलाई अन्तिम विदा गर्दै एउटी महिला" सायद सोच्दै होलिन्– "अब जीवन एक्लै कसरी काट्ने होला,

टुहुरा लालाबालालाई कसरी एक्लै हुर्काउने, अब कसले साथ दिन्छ र म अभागीलाई!"

यसको छेवैमा एउटा अर्को तस्वीरमा हेलिकप्टरबाट खसालिएको बमले सोत्तर भई छरपस्ट ढलेका बालकहरू र बाख्राहरूका दृश्य देख्दा त मेरो मन त्यसै–त्यसै भक्कानिएको झैं भयो। सायद ती केटाकेटी बाख्राहरूसित खेल्दै थिए होलान्।

फोटो प्रदर्शनी हेर्दै हामी दर्शक अघि बढ्दै थियौं। बोल्न मन लागिरहेको थिएन। गला सबैका अबरुद्ध थिए। तस्वीरमा एकजना बृद्धाको आँशुले भरिएको कुवाजस्तो आँखामा गएर म एकछिन् अडिन्छु। पशुपति आर्यघाटमा आफ्ना सन्तानको अन्तिम विदाइको बेला बगेको आँशु रहेछ एउटी बृद्ध आमाको। सोच्दै होलिन् "सास जाने बेलामा मलाई सुम्सुम्याउने मेरा एक मात्र सन्तानलाई आज म आफैले विदाइ गर्नुपर्‍यो।" उनको अनुहारमा मैले पढें– "हे ईश्वर! मृत्यु कुरेर बसेकी मलाई नलगेर नलानुपर्नेलाई लग्यौ, बिना कसुर मलाई किन यत्रो सजाय दियौ भगवान!"

मलाई मात्र हो कि यत्ति नमीठो स्वाद भन्दै अघि बढ्दै थिएँ। एकजना दर्शकले लेखेको प्रतिक्रिया भित्तामा टाँगिएको देखें। लेखिएको थियो– "तस्वीरहरू हेरेर आँशु बगिरह्यो। फेरि यस्ता तस्वीरहरू हेर्न नपरोस्।" यसैगरी अर्का दर्शकले लेखेका थिए– "यी तस्वीरहरू देश चलाउने नेताहरू ...ले हेर्नुपर्दछ।"

यो फोटो प्रदर्शनीले मलाई नमीठो स्वाद र सत्य मात्र चखाएन। एउटा नयाँ आशा उपहार पनि दियो। म सोच्दथें आजका किशोरकिशारी तथा युवालाई देशको अवस्थाबारे उत्ति चासो छैन। केवल साइबर अर्थात इन्टरनेटमा रमायो विदेशको सपना बुन्यो उतैको कल्पना गर्‍यो उतै गयो बस्। भोलि हाँक्ने पुस्ता अब खै त जस्तो लाग्दथ्यो मलाई। तर यो मेरो सोंचमा भेटिएको निराशा त्यति सत्य होइन रहेछ। प्रदर्शनीमा आउने जति पनि दर्शक थिए प्रायः किशोरकिशोरी र युवाहरू नै थिए। यो

देखेर म आश्वस्त भएँ। मैले दुःखभित्र सुख भेटें जस्तो लाग्यो, बादलमा भेटिएको चाँदीको घेराझैं।

प्रदर्शनीस्थलको अन्तिम कक्षमा बिक्रीका लागि राखिएको “सुन्दर शान्त नेपाल” लेखिएको एउटा टि–सर्ट किनें र गह्रौं पाइला उचाल्दै भऱ्याङ्ग ओर्लिए। फोटो प्रदर्शनी हेर्ने दर्शकको लाम अझै बढ्दै थियो। बाटोमा फर्कदा केही समयअघि आफूले रचेको “क्रान्तिको मूल्य” कवितालाई सम्झें। जसको एक अंश पाठकसमक्ष राख्न चाहन्छु।

...“सबै थाहा छ मान्छेलाई
गन्तव्यको मूल्य
अनि थाहा छ
हिडाइका दुःख घाउ र पीडाको अर्थ
तर थाहा छैन
कहाँ पुगेपछि निको होला घाउ
कति हिडेपछि बिर्सने होला पीडा
अनि थाहा छैन
अझै कत्ति अञ्जुली सिंदूर समय र हृदय
लिलाम भएपछि मात्र चुकाउला मान्छेले
क्रान्तिको मूल्य।”



# (३) श्रद्धाञ्जलि एउटी लिम्बूनीलाई

ठूला मान्छेले मर्न अघि मान–भाउ र मरेपछि पनि श्रद्धाञ्जली पाउँछन्। हुनेका सन्तानले आफ्ना पितृको श्राद्ध गर्दछन्। तर एउटी सामान्य लिम्बूनी महिला अझ मापाकी जसको कुनै सन्तान आज यो भौतिक संसारमा छैनन् यस्ती महिलालाई  आज कमसेकम सम्झनेसम्म मानिस पनि छैनन् जस्तो लाग्छ। यसैले मानवीय नाताले अघि सरेर म उनलाई श्रद्धाञ्जली दिन खोज्दैछु– थोरबहुत जीवनी कोट्याउँदै।

विक्रम सम्वत् २०३० को दशकमा एउटी साइलीबूढी अर्थात् लिम्बूनीबूढी थिएन् ताप्लेजुङ जिल्लाको हाङपाङ गाउँमा रहेको सरस्वती हाइस्कुलको खेलमैदानै मुन्तिर। त्यसबेला म उनलाई श्रद्धाभन्दा पनि डरपूर्वक साइलीबजू भन्दथें। उनी हामीजस्ता स्कुले विद्यार्थीका खलनायिका बनेर सधै विद्यार्थीलाई पीडा दिने गर्दथिन्। खेल्दाखेल्दै भकुण्डो मैदानबाट तल उनको बारीमा खस्यो भने तब हाम्रो मुटु ढुक्ढुक् हुने गर्दथ्यो। बुझ्नुपर्दथ्यो साइलीबजूको हँसियाले अब भकुण्डो प्वाल पर्‍यो। कि त बुझ्नुपर्दथ्यो बूढीले टिपेर घरमा लगेर लुकाइन्। भकुण्डो माग्न गए चल्ला हुर्काउने पोथी कुखुरीले खेदाए झैं हातमा हँसिया उझ्याउँदै विद्यार्थीलाई गुटुटु लखेट्थिन्। त्यसबेला विद्यार्थीको भागाभाग हुने गर्दथ्यो। यस्तै भय र त्रासबीच पनि हामी प्रायः दिनहुँ जसो फुटबल खेल्ने गर्दथ्यौं।

हाम्रो विद्यालयका दुइटा खेलमैदान थिए। एउटा ठूलो र अर्को सानो मैदान। ठूलो मैदानमा हामी केटाकेटीले त्यत्ति खेल्नै नपाइने। त्यसैले सानो मैदानमा गएर खेल्नुपर्दथ्यो जहाँबाट भकुण्डो सिधै बूढीको बारीमा खस्ने गर्दथ्यो। उसबेला लाग्दथ्यो ती महिला कत्ति शक्तिशाली कत्ति निर्दयी कत्ति छुच्ची! तर आज त्यसबेलाकी त्यस्ती क्रूर ब्यक्तिको पीडा, मनोविज्ञान बल्ल बुझ्दैछु म। बुझ्नखोज्दैछु वास्तवमा जिउनलाई मानिस बेलाबेला

कति कठोर बन्नु पर्दोरहेछ। फूलमा पलाएका काँडाको अर्थ पनि बुझ्दैछु यसैबेला र श्रद्धाञ्जलि स्वरूप केही शब्द कोर्दैछु उनैलाई सम्झँदै।

एकदिनको कुरो हो, स्कुलको ठूलो मैदानमा विद्यार्थीबीच फुटवल म्याच हुँदैथ्यो। खेलको बीचैमा खेल मैदानको बार नाघेर भकुण्डो गयो सिधै तल बारीमा– भकुन्डो लखेट्दै बूढीले सिधै भकुण्डोलाई हँसियाले ठुँगिदिइन्। भकुण्डो प्वाल पर्‍यो र हावा गयो– फुस्स। विद्यार्थी आवेगमा आए र उनको कोदोबारी उफ्रीउफ्री माडिदिए। कोदोबारी सोत्तर भयो। ठूलो वादविवाद र घम्साघम्सी भयो। त्यत्रा सयौं विद्यार्थीहरूको प्रतिकार साइलीबजू एक्लैले गरिन्। मुखले मनपरी भने पनि कसैले उनलाई छुने आँट चाहिँ गरेन केवल बारी माडमूड गरेर विजय हाँसिल गरेको मूडमा विद्यार्थी फर्किए। त्यत्रो क्षति उनले त्यत्तिकै खपिन्। यसरी उनी यस रूपमा विद्यार्थी, शिक्षकका लागि एकप्रकारकी खलनायिका नै थिइन्।

तर म भने उनको दुईटा रूप देख्दथें। हाम्रो घर र उनको घर तल्लो घर र माथिल्लो घर अर्थात छिमेकी थियौं हामी। उनी मसँग उनी लिम्बू भाषामा कुरा गर्न खोज्थिन् म बुझ्दथें तर फर्काउन लजाउँथें। नेपाली भाषामैं छोटो प्रत्यत्तर दिएर उम्कन्थें। उता विद्यार्थीसित त्यत्ति कठोर तर छरछिमेकसँगको दैनिक व्यवहारमा उनी साह्रै सरल र नरम स्वभावकी थिइन्। मलाई थाहा भएदेखि नै उनका छोराछोरी वा अरू कोही पनि घरमा थिएनन्। न त श्रीमान नै थिए। घरमा निर्धक्क एक्लै बस्थिन् एक्लै, उनको कोही थिएन। वास्तवमा विवाह नै नगरी बसेकी बूढीकन्या थिइन् उनी।

साइलीबजू दशैंको बेलामा मेरी आमालाई खान बोलाउँथिन्।

म पनि आमाको पछ्यौरामा झुण्डिदै उनको घर जान्थें। उनी याङ्गबेन अर्थात लेकमा रूखमा फल्ने एकप्रकारको झ्याउलाई राँगाको रक्तीमा पकाएको परिकार र कोदोको जाँडले आमालाई सत्कार गर्दथिन्। र मलाई पनि सानो बोटुकोमा याङ्गबेन र काँसको लोहोटामा पानी दिन्थिन्। याङ्गबेन मलाई साह्रै मीठो लाग्दथ्यो। पीरो पखाल्न म पानी पिउँथें। कहिले काहिँ दुम्से कुखराको प्वाँखको अचार खुवाउँथिन्। पीरो तर स्वादिलो हुन्थ्यो। त्यो पनि म पानीसित मजाले खाइदिन्थें। यस्तो परिकार चाडपर्वमा मात्र हुन्थ्यो। आमासँग अरुबेला जाँदा चाहिं छ्यापीको अचार, कहिले दुङ्गदुङ्गे पातको अचार, कहिले रामभेंडाको काँचै पिसेको अचार बनाउँथिन्। म आमाको छेउमा बसेर सुटुक्क आमाको अचार अलिअलि चाट्थें मलाई त्यसबेला पिरो पिरो मीठो मीठो लाग्दथ्यो।

म त्यसबेला सायद पाँच छ वर्षको थिएँ होला। आज चालीस वर्षपछिसम्म पनि त्यो याङ्गबेन, छ्र्याप्पी, दुङ्गदुङ्गे र रामभेंडाको अचारका स्वाद जीब्रोमा अझै टाँसिएकै छ। आजकल मैले कतै याङ्गबेन, दुङ्गदुङ्गेको साग देखें भने उनकै झल्झल्ती याद आउँछ। यत्ति मात्र होइन, कतै घिरौला र कुभिण्डो देखें भने पनि तिनै साइलीबजूको याद आउँछ। उनी बाख्राको कटेराको छानाभरि घिरौंला र कुभिण्डो फलाउँथिन्। म उनको आँगनको बाटो भएर हिड्दा दिनदिनै त्यो फुलेको फलेको बढेको पाकेको हेर्दै हिड्थें। बजुले ती कुभिण्डो, घिरौला, फर्सीहरू पाकेपछि कुनबेला टिप्थिन् कुन्नी! पछि म त्यही बाटो हिंड्दा बार्दलीमा बसेर तिनीहरूले मलाई हेर्दै हाँस्दै बसेकाझैं देख्थें।

हेर्दै मापाकी साइलीबजूसित बोल्न भने म हत्तपत्त सक्तिनथें निकै ठूलो भइञ्जेलसम्म पनि। काठमाडौमा चिकित्साशास्त्रको प्रमाणपत्रतह सकेर म मेरो गाउँको हेल्थपोष्टमा

इञ्चार्जको रूपमा वि.स.२०३७ सालमा खटिएर आएँ। त्यत्तिबेला साइलीबजू निकै बूढी भइसकेकी थिइन्। एकदिन उनी घरको फलैंचामा बसेर आमासँग गफ गर्दै थिइन्। नरम स्वरमा उनले मलाई भनिन् "नवराज यो चिलाउने घाउको औषधी छ भने मलाई दे' न!" भन्दै उनको टाउकोमा आएको घाउ देखाइन्। मैले हेरें टिनिया केपिटिस अर्थात टाउकाको दाद रहेछ। मैले स्वास्थ्य चौकीमा भएको औषधी ल्याइदिएँ। त्यसले केही जाती  भयो। पछि २०४० सालदेखि म सरुवा भएर अन्यत्र जिल्लातिर लागें।

पछि घर आउँदा एकदिन थाहा पाएँ उनको मृत्यु भइसकेछ। बडो कष्टपूर्वक मृत्यु भएछ। थाहा पाएर मलाई सारै नरमाइलो लाग्यो। देख्छु, विद्यालय र खेलमैदान अन्यत्र सारिएको छ। हामीले उहिले खेल्ने मैदान पनि शून्य छ। तल साइलीबजूको घर एक्लै छक्कपर्दै ठिङ्ग उभिएको छ, यता म जस्तै। ढोका बन्द छ ताला लागेको छ घरमा। फुटवल खेल्ने विद्यार्थी पनि कोही छैनन्। कस्तो बिडम्बना! साइलीबजू जब बितिन् विद्यालय र खेलमैदान पनि अन्यत्रै सरेछ विद्यार्थी पनि उतै गएछन्। बाँचुञ्जेलसम्म विद्यार्थीसित पौंठेजोरी खेल्नुपर्ने नियति रहेछ कठै साइलीबजूको!

जे होस्, यस्ती दृढ महिला मैले कमै देखेको छु। आफ्नो इच्छा र आदर्शमा सधैं अटल र अविचलित महिला जसको बाँचुञ्जेल त कोही थिएन नै। मरेपछि पनि उनलाई खै कसले सम्झला र! कसैले सम्झे पनि त्यसबेला उनको त्यो कोदोबारी माड्ने उही विद्यार्थी जो आज म जस्तै कताकता छरिएका होलान्। तिनले कदाचित् सम्झे पनि एउटी खलपात्रको रूपमा मात्र उनलाई सम्झेलान्।

तर आज मैले उनलाई एउटी संघर्षशील नायिकाको रूपमा सम्झेको छु। यसबेला उनको फोटो सम्म छैन मसँग तैपनि उनको तस्वीर मनमा साँचेको छु। मैले बाल्यकालमा खाएका ती स्वादिला परिकार निश्चय अब म कहिल्यै खान पाउने छैन। कतै कसैले दिइहाले पनि अव म स्वास्थ्यको कारण खान सक्ने छैन। सदा स्वाद र उनको याद मलाई एकसाथ आइरहने छ। एउटी दृढनिश्चयी व्यक्तिका रूपमा बाँच्न सफल नायिकालाई म सदा श्रद्धा गर्नेछु। खुशीसाथ जीवनभर एक्लै बाँच्ने अनि एक्लै मर्ने स्वर्गीय साइलीबजू अर्थात् मापाकी तर मनकारी लिम्बूनीलाई मेरो भावपूर्ण श्रद्धाञ्जली।

# (४) आमाका रूपहरू

२०६३ सालको चैत्र महिनामा एक महिना लामो एउटा तालिमको दौरानमा काठमाडौंको बसाइमा छु। शनिबारको दिन शान्तिपूर्ण स्थलमा समय बिताउने अभिप्रायले स्वयम्भू जान बस चढें। धुम्बाराहीबाट सामाखुशीमा पुगेपछि अचानक बस रोकियो। हिजो एकजना बालकलाई ट्याङ्करले किचेर मारेपछि त्यसको विरोधमा सामाखुशीमा बीचबाटैमा टायर बालेर बाटो बन्द गरिएको रहेछ। अगाडि बढ्न खोजेका गाडीहरूमाथि ढुङ्गामुढा भयो। स्वयम्भू जान सकिएन। बाध्य भएर त्यहाँबाट फर्किनुपऱ्यो। बदलामा बौद्ध गएर शान्तिको सास फेरौंला भन्ने सोचें। त्यहाँ पुगेर बौद्ध स्तूपामाथि चढें र चारैतिर रमिता हेरें। विभिन्न देशका पर्यटकहरू प्रसस्तै देखिन्थे। त्यहाँ भोटिनीहरू उनीहरूको परम्परागत पोशाकमा देख्दा म कुनै बेला सेवाको सिलसिलामा संखुवासभा जिल्लामा रहँदा बस्दाको एउटा सम्झना मलाई आयो।

निकै वर्ष अघिको संखुवासभा खाँदबारीको एउटा परिदृश्य मेरो मानसपटलमा घुम्न थाल्यो। जुन संझनाले मलाई एकप्रकारको तीतो–तीतो मीठो–मीठो स्वाद आउँछ। पाठकहरूलाई थाहै छ खाँदबारीमा किमाथाङ्का मकालुतिरबाट भोटेभोटिनी र चौरीको आवतजावत प्रसस्तै हुने गर्दछ। त्यो हिमाली जिल्लामा सामान ढुवानी गर्नुको विकल्प पिठ्यूमा सामान बोक्नु नै हो।

एकदिन म खाँदबारी बजारको चोकबाट डेरातिर लाग्दै थिएँ। मेरो अघि अघि एकजना भोटिनी कुस्त भारी बोकेर सुईंसुईं हिडिरहेकी थिई। अलि छेउमा पुगें। एउटा चारपाँच वर्षे बालक उक्त भोटिनी भरियाको बख्खु समाएर रूँदै हिड्दै छ। सायद त्यसबेला भोकले तिर्खाले वा कुनै चिज किनी माग्ने आकांक्षाले बालक रूँदैछ। अलि नजिक पुगेपछि देखें सकिनसकी भोटिनी आमा भारी बोकेर हिड्दै थिई। बोल्न पनि नसक्ने गरि भारीले थिचेको छ निधारमा। साथमा छोरो रोएको रोयै हिडिरहेछ। उनी निरन्तर एकनासले आफ्नो बाटो हिडिरहेकी छिन्। मैले बाटोमा उनलाई नाघ्ने बेलामा उनको मुहार पुलुक्क हेरें। कति शहनशीलता कत्रो क्षमता कत्ति दृढता अनि बालकप्रति कत्रो माया ती भेटिनी दिदीको मुहारमा। म त छक्कै परें। उनको अनुहार पीरले अलिकति पनि अमिलिएको देखिन। बरु उनको अनुहारमा आशा र प्रेमका रेखा र ममताका लाली पसिनासितै टल्किरहेको देखें मैंले।

त्यसबेला मैले मेरी आमालाई सम्झेंको थिएँ। म पनि त कोक्रोबाट हातखुट्टा लागेर आमा पछ्याउने भएपछि आमाकै पछि

पछि पधेंरा जान्थें। गाग्री रित्तो हुँदा त अप्ठेरोमा आमाले मलाई उचाल्नुहुन्थ्यो, बोक्नुहुन्थ्यो। पधेंराबाट फर्कदा पानीको गाग्रो भरिएपछि त आमाले मलाई बोक्न सक्नुहुन्नथ्यो तर त्यो कुरा म कहाँ बुझ्दथें होला र! सायद त्यसबेला पनि म फेरि आमालाई बोक्न भन्थें होला। त्यसबेला म आमा जत्ति हिड्न पनि सक्दिन थिएँ होला।

यसरी पधेंरा जाँदा म आमाको अघिअघि हाँस्दै उफ्रदै जान्थें तर फर्कदा प्रायः आमाको पछिपछि रूँदै फर्कन्थें– त्यो भोटिनीको बालक झैं। मैले एकपटक त्यो बालक भएर पनि आफूलाई हेरें। म पनि उसबेला तीनधारे पधेंरोबाट आमाको गुन्यू समाउँदै सायद यसरी नैं रूँदै फर्कन्थें। मैले मेरै बालापन सम्झें र आफैलाई सोधें– धत्तेरी त्यसबेला आमालाई कत्ति दुःख दिएँछु हगि!

संखुवासभा खाँदबारीमा चुईचुई भारी बोक्ने ती भोटेनीलाई सम्झन्छु। उनको भारी भन्दा गह्रौं पीरको बोझ सम्झन्छु। ठीक यसैबेला मेरी आमाको अनुहार र सम्झना मनमा झुल्कन्छ। आहा! आमाको मन कत्ति विशाल हुँदोरहेछ मैले अझैसम्म नाप्नै सकेको छैन।

# (५) तरकारी बेच्ने महिला

'तरकारी लेवे' भन्दै एकाबिहानै टोलटोलमा तरकारीवाली आउँदा हामी टाउकोमा बोकेको उनको तरकारी भरिएको ढाकीमा आँखा पुऱ्याउँछौं।  मन पर्ने तरकारी ल्याएकी रहिछे भने छानेर मोलतोल गर्दछौं। उनले यदि दश रुपैयाँ दाम भनेमा हामी पाँच रुपैयाबाट दलाली सुरु गर्दछौं। सकेसम्म दाम घटाएर नलिएसम्म हामीलाई तरकारी किनेको चित्तै बुझ्दैन। मेरो घरमा पनि त्यस्तै थियो। यिनीहरूसित सकेसम्म दलाली गर्नुपर्दछ भन्ने धारणा थियो।

आज मेरो घरमा यो धारणा एक्कासि परिवर्तन भएको छ– विराटनगरका तरकारी बेच्ने महिलाहरूको आत्मकथा संकलन गरिएको एउटा पुस्तक मेरो हातमा परेपछि। बाल समाज नेपाल संस्थाकी अध्यक्ष सीता पौडेल र उनको संस्थाले एक्सन एडको सहयोगमा तरकारी व्यवसायीको अध्ययन गरी उक्त आत्मकथाको पुस्तक लेखन तथा प्रकाशन गर्नुभएको रहेछ। संस्थाले विराटनगरका घरघरमा डुलाउने तथा फूटपाथमा तरकारी व्यवसाय गर्ने महिलाहरूको अध्ययन गरी आत्मकथा संकलन गरेको रहेछ। कथाहरू पढें। जसमा तरकारी व्यवसायी महिलाहरूले भोगेका भुक्तमानी र संघर्षका आत्मकथन र विवरण थिए। कुनै साहित्य पढेजस्तै रोचक लाग्यो। आत्मकथाहरू जीवन्त र मार्मिक थिए। आत्मकथाहरू भएको उक्त प्रतिवेदनले मेरो मन छोयो। सोचें यो पुस्तक मेरी श्रीमतीलाई पनि रोचक लाग्नेछ। उनलाई पनि पढ्न दिएँ।

एक दिन मेरी श्रीमती चञ्चलाले मलाई भनिन्– धत्तेरी यी 'तरकारी लेवे' भन्दै तरकारी डुलाउनेहरूलाई त्यत्ति धेरै दलाली

गर्नु नहुने रैछ। मैले 'किन' भनेर उनलाई सोधें। उनले अलि गम्भीर भएर भनिन्। तपाईले दिनु भएको तरकारी डुलाउँदै बेच्ने महिलाहरूको आत्मकथा भएको पुस्तकले ममा परिवर्तन ल्याएको छ। यिनीहरूको व्यवसायमा धेरै दुःख रैछ। हामी अनावश्यक दलाली गरेर उनीहरूको श्रमको उपेक्षा गर्दा रैछौं। आजकल यिनीहरूसित तरकारी दलाली गर्न मैले कम गरिसकें। अरुले पनि यिनीहरूलाई साह्रै होच्याएर दलाली गरेको देख्दा मलाई नरमाइलो लाग्छ भनेर भनिन्। उनको कुरा सुनेर मलाई मनमनै रमाइलो लाग्यो। सोचें, कुनै एक पुस्तकले मान्छेमा वास्तवमा परिवर्तन ल्याउँदो रहेछ। मेरै अघि यसरी परिवर्तन आएको देख्दा म दङ्ग परें।

यही घटना मैले निकै पटक सार्वजनिक ठाउँमा सुनाएँ। एकजना पत्रकारले प्रश्न गरे यसबाट त तपाईलाई नोक्सानी भएन र? मैले उनलाई जवाफ दिएँ– मेरो लागि तरकारीमा पर्ने एक दुई रुपैयाँको व्ययभारले खासै त्यत्रो फरक नपर्ला तर यसले उनको परिश्रमको मूल्य दिनेछ र यसबाट व्यवसायको उन्नती हुनेछ। उनका छोराछोरीले स्कूल पढ्न पाउनेछन्। बिरामी हुँदा उपचार गर्न सक्नेछन्।

तरकारी हामीले खाने खानाको एक महत्वपूर्ण अंश हो। यो नखाइकन हामी स्वस्थ रहन सक्दैनौं। शहरबजारमा सबैले नियमित रूपमा आफै तरकारी उत्पादन गर्न सक्दैनन्। शहरमा तरकारी बिहान बेलुका किनेरै गुजारा गरिन्छ। यसरी हामीलाई तरकारी घरघरमा डुलाउँदै ल्याउने तरकारी बेच्ने तराईवासी महिलासँग शहरमा बस्ने हामी सबै परिचित छौं। हामी सबैले उनीहरूको परिश्रम र व्यवसायको सम्मान गर्नुपर्दछ।

# (६) हाक्पारे सङ्गीत

सङ्गीतबारे चर्चा गर्न वास्तवमा गाह्रो छ तर यसबारे कुरा गर्दा उत्तिकै आनन्द भने आउने गर्दछ। एउटा विज्ञको रूपमा नभई एउटा श्रोताका रूपमा सङ्गीतको चर्चा गर्न सकिन्छ कि भन्ने निकै अघिदेखि लागेको थियो। जून २१ तारिखका दिन टेलिभिजन हेर्दैथें अन्तर्राष्ट्रिय सङ्गीत दिवस रहेछ। सूचना पाएर मेरो मन कुत्कुतियो। एउटा सङ्गीतप्रेमी श्रोताका रूपमा सङ्गीतको चर्चा गर्दैछु।

नेपाली सङ्गीतमा पचासका दशकमा दुईवटा गीत लोकप्रिय भए। अलि अघि दीप श्रेष्ठले सङ्गीतवद्ध गरि गाएको विप्लव 'प्रतीक' को गीत यस्तो छ–

हर रात सपनीमा ऐंठन हुन्छ
गाउँमा कतै पहिरो गयो कि!

यो गीतको सङ्गीत मलाई विशेष मन पऱ्यो। यसको शब्द, सङ्गीत र स्वरले जुन त्रिवेणी बनेको छ त्यो उत्कृष्ट छ। यो गीतको शब्द सरल र मार्मिक छ। अझ यसको सङ्गीत त विशिष्ट छ। जसको सङ्गीतले मेरो मन छोयो। यसको कारण म आफै बुझिरहेको थिइन। बरिष्ठ गायक तथा सङ्गीतकार दीप श्रेष्ठलाई म मन पराउँछु। उनी संचार माध्यममा के बोल्छन् ध्यान दिएर सुन्ने पनि गर्छु। उनले एउटा रेडियो अन्तरवार्तामा उक्त चर्चित गीतका बारेमा एउटा कुरा उल्लेख गरेका थिए। 'प्रस्तुत गीतमा यस्तो विशिष्ट सङ्गीतको रचना कसरी गर्नुभयो?' भन्ने जिज्ञासा राख्दा उनले प्रत्युत्तरमा आफूले हाक्पारे सङ्गीतबाट प्रभावित भएर नै यो सङ्गीतको रचना गरेको हुँ भनेर जवाफ दिएका थिए। म उनको प्रतिभाको त कदर गर्दथें नै उनको इमान्दारिताले

अझ दङ्ग परें।

यो हाक्पारे सङ्गीतसित मेरो गहिरो नाता पनि छ। कुनै लिम्बूको मृत्युपश्चात वर्खान्तमा लिम्बू फेदाङ्गबाले मृतात्मासँग कुरा गर्ने तथा विदाई गर्ने सिलसिलामा लेग्रो तानेर फलाक्ने गरिन्छ। यसबेला एउटा भावुक सङ्गीतमय वातावरणको सिर्जना गरिन्छ। यो सुनेर परिवारका आफन्तजन छाती पिटीपिटी रुने गर्दछन्। बाल्यकालमा म यो सब देखेर छक्क पर्दथें। यसरी यसैबेलादेखि नै यो हाक्पारे सङ्गीत मेरो हृदयमा बास बसिसकेको रहेछ। जसलाई दीप श्रेष्ठको सङ्गीतले अहिले उप्कायो र भावुक बनायो।

यसैगरी केही समयपछि नेपाली सांगीतिक जगतमा अर्को लोकगीतले गाउँ शहर घन्कायो।

वारि जमूना पारि जमूना
जमूनाको फेदैमा मनकामना।...

यो सङ्गीत पनि हक्पारे सङ्गीतमा आधारित छ। यो गीत गाएर एकपटक ख्यातीका चुली पुगेका खेम गुरुङ्गका अन्तरवार्ताहरू पनि मैले सुनें। तर उनले यो गीतसङ्गीतको बारेमा चर्चा गर्दा कतै पनि हाक्पारे सङ्गीतको नाम लिएको मैले सुनिन।

हाक्पारेलाई रेडियो नेपालबाट भगत सुब्बा, मोहन आङ्गबोले गाइसकेका छन्। कतिपय गीतसङ्गीत त क्यासेटकै रूपमा बजारमा आएका पनि छन्। नेपाली सङ्गीतलाई हाक्पारे सङ्गीतले दिएको कोसेली सबै खाले श्रोताले मन पराएका छन्। यसरी नेपाली सङ्गीत तथा नेपाली साहित्यलाई नेपालभित्रकै अन्य राष्ट्रिय भाषा र स्थानीय संस्कृतीको ठूलो योगदान रहेको पाइन्छ।

आधुनिक नेपाली सङ्गीतमा पूर्वीय शास्त्रीयसङ्गीतको ठूलो प्रभाव छ। हाल आएर नेपाली सङ्गीतलाई पाश्चात्य सङ्गीतले पनि उत्तिकै प्रभाव पारेको पाइन्छ। उत्तरआधुनिककालमा आएर सङ्गीतमा यिनै पूर्वीय तथा पाश्चात्य एवम् लोकगीतसङ्गीतको सम्मिश्रण गर्ने परम्परा पनि सुरु भइसकेको छ। पुराना गीतसङ्गीतलाई रि–मिक्स अर्थात् पुनःसंयोजन गर्ने कार्य भइसकेको छ। यस्ता कार्यका राम्रा नराम्रा दुवै पक्षहरू छन्। यसरी आज समयको प्रवाहसितै आएको यस्तो परिवर्तन वा विनिर्माण कार्य रोक्नु असम्भव नै छ। केवल राम्रा पक्ष बढी उजागर र नराम्रा पक्ष न्यूनीकरण गर्न मात्र सम्भव होला।

नेपाली लोकसङ्गीतको कुरा गर्दा आज गण्डकी अञ्चललाई लोकगीतको राजधानीका रूपमा हेर्ने गरिन्छ। यो यत्तिकै विकास र स्थापित भएको होइन। त्यहाँका गुरुङ्ग जातिले रोदीघर जस्ता सांस्कृतिक संस्थाको विकास गरे। जसले त्यहाँ लोकसंस्कृतिको सुन्दर विकास भयो।

आज पूर्वी पहाडका किरात लिम्बूहरूको एक सांस्कृतिक परम्पराको रूपमा रहेको हाक्पारे सङ्गीत आज सिङ्गो नेपाली सङ्गीत वाङ्गमयकै निधिको रूपमा स्थापित भएको कुरालाई माथिका दुईवटा गीतले पुष्टि गरेका छन्। यसैले यस्ता सांस्कृतिक परम्परालाई स्थानीय तथा जातीय निधिका रूपमा मात्र नलिई सिङ्गो नेपाली सङ्गीतको अङ्गका रूपमा लिनु पर्दछ। साथै  यसको उचित संरक्षण र प्रवर्द्धनको पनि उत्तिकै आवश्यकता देखिन्छ।

# (७) गीतसङ्गीत भित्र देश र जीवन खोज्दै

जीवनको अन्तिम लक्ष्य सायद आनन्द नै हो। कलाले प्रायः सबैलाई आनन्द दिन्छ यसैले कला मन नपर्ने मानिस विरलै होलान्। सङ्गीत विधा कलाको यस्तो विधा हो जसमा सर्जक र श्रोता दुवैले आनन्दानुभूति गर्दछन्। सङ्गीतको यही विशिष्ठताले गर्दा मानिस सङ्गीतमा लठ्ठ हुन्छन्।

विराटनगरको विराट कला मन्दिरद्वारा २०६४ असार २३ गते शनिबारको दिन विराटनगरको सभागृहमा भव्य साङ्गीतिक कार्यक्रमको आयोजना गरियो। कार्यक्रममा साहित्यकार खेम नेपालीले उद्घोषण गर्दै उक्त दिन हजारौं वर्षमा आएको दिन हो भनेर कार्यक्रमको थालनीमैं दर्शकलाई रोमाञ्चित बनाउनु भयो। साँच्चै त्यो दिन सात अङ्कको अद्वितीय संयोग परेको रहेछ– २००७-०७-०७-०७ अर्थात् सन् २००७ को सात जुलाई महिनाको सात तारिख सात र दिन शनिबारको सात गरी चारवटा सातहरूको संयोग मिलेको दिन।

उहाँले कार्यक्रमको थालनीमा उद्घोषण गर्दै एकताका जनता जगाउने गीत गाउने गायकका रूपमा सम्बोधन गर्दै मलाई पनि मञ्चमा बोलाउनु भयो। यति लामो समयको अन्तरालमा सङ्गीतको नाताले कसैले मञ्चमा बोलाइदिँदा मलाई मेरो अतीतको मीठो नमिठो याद आयो। तीन दशक अघि अर्थात तीसको दशकमा मैले पनि कलेजका यस्तै स्टेजहरूमा कतै गीटार कतै हारमोनियम लिएर कहिले प्रेमगीत त कहिले जनता जगाउने गीत गाएको थिएँ।

मायाप्रीतिका कुरा, सुरासुन्दरीका बयान, सिद्धान्तका नारा आदि आजकल कला र साहित्यमा अटाइनअटाइ आउने गर्दछन्। तर यसले मात्र जीवनको रथ चल्दैन। जीवन र जगत जगाउने

साथै जोगाउने गीत पनि चाहिन्छन्। सकारात्मक सोच, सद्भाव र समृद्धि बढाउने खालका साहित्य आजको आवश्यकता हो।

अँध्याराले छोपेका बस्ती र पिछडिएका गाउँमा पुग्दा यस्ता गीतमा आज पनि उत्तिकै सान्दर्भिकता झल्कन्छ।

‘हातमा कलम हुनेहरू कलम लिएर उठ
हातमा ज्यावल हुनेहरू ज्यावल लिएर उठ
गाउँ गाउँबाट उठ बस्ती बस्तीबाट उठ
यो देशको मुहार फेर्नलाई उठ’

आज कतिपय मान्छेभित्र द्वन्द्व र युद्धमा फरक खुट्याउन नसकेको स्थिति प्रतीत हुन्छ। द्वन्द्व शान्तिपूर्ण हुन्छ र यसभित्र सकारात्मक किरणसमेत अन्तर्निहित हुन्छ। द्वन्द सामाजिक प्रक्रिया हो, जसलाई रोक्न सकिंदैन तर हल गर्न सकिन्छ। अर्कातिर युद्ध जीवनको अन्त हो। यो अन्तिम हतियारले अन्ततः कसैको जीत हुँदैन तर यसलाई रोक्न भने सकिन्छ। कसैले वीरताको जलप जतिसुकै लाए पनि जीवन आहुति दिनु भनेको जीवन देखि भाग्नु हो।

सबैलाई थाहा छ जीवन एक्लै बाँच्न सम्भव छैन। साँच्चै भन्ने हो भने जीउनलाई मित्रै मित्रले मात्र सम्भव हुँदैन दुस्मन पनि चाहिन्छ। कवि मनु मञ्जिलले कवितामा दुस्मनलाई त्यसै प्रेम गरेका होइनन्। दुस्मनले बाटो देखाउँछ जीवनमा हिँड्न।

‘भूल हो तेरो भागी हिड्नु जीवनदेखि डराएर,
यहाँ हिड्नेहरू नै लक्ष्यमा पुग्छन् भाग्नेहरू पछि छाडिन्छन्’

गोपाल योञ्जनको गीत जो किरण प्रधानले गाए मलाई पनि बेलाबेला गुन्गुनाउन मन लाग्छ। यस्ता गीतले मानिसलाई सदा जीवनोन्मुख बनाउँदछ। र जीवनलाई माया गर्न प्रेरित गर्दछ।

मलाई सङ्गीत साध्य र साधन दुवै हो भन्ने लाग्छ। आज जनता ब्यूँझाउन शिक्षक, विद्यँर्थी, नेता, साहित्यकार, समाजसेवी सबै लागेका छन्। सुतेकालाई उठाउँदा जगाउँदा निकै

कसरत गर्नुपर्छ। यो कार्य जटिल मात्र हैन कठिन पनि छ। यसमा लाग्दा आनन्द नआउन पनि सक्छ। तर त्यही चेष्टा सङ्गीतको माध्यमबाट गर्दाखेरी श्रोता वा दर्शक मात्र होइन स्वयम् सर्जक अर्थात कलाकारलाई पनि आनन्द आउँछ। यो सङ्गीतको महत्वपूर्ण विशेषता हो जसले मलाई पनि सधैं आकर्षित गर्ने गरेको छ।

जे होस् आज इतिहासको महत्वपूर्ण कालखण्डमा बाँच्न पाएकोमा हामीले गर्व मान्नु पर्दछ। आज कसैले पनि जीवन बिनाको देश वा देश बिनाको जीवनको कल्पना गर्न नपरोस्। जीवनमा अरूका गीत धेरै गाइयो सुनियो। आज मलाई पनि मेरो देशको गीत लेख्ने रहर जाग्यो। एउटा गीत लेखें, जसलाई विराट कला केन्द्रका सङ्गीतकार साजन राईले सङ्गीतबद्ध गरे र त्यही कला केन्द्रकै कलाकारहरूले वार्षिकोत्वसमा गाइदिए। मैले पनि सबै सामु दर्शक भएर आफ्नै रचनाको प्रस्तुति सुनें। जसको आनन्द म लेखेर सबै व्यक्त गर्न सक्दिन। तैपनि अन्तमा, पाठकसामु उक्त गीतको एक अंश पस्कन्छु।

नेपाली नेपाली हामी नेपाली
मधेसी होस् वा जनजाति हामी नेपाली
दलित होस् वा तागाधारी हामी नेपाली।

हिमाल पहाड तराई माटोको रङ्ग एउटै छ
शर्मा शेर्पा थारु राई रगतको रंग एउटै छ
मेचीमा घाम झुल्कदा कालीको शीत पग्लिओस्
हिमाल पग्ली झरेर मैदान सारा भिजाओस्
नेपाली नेपाली हामी नेपाली
मधेसी होस् वा जनजाति हामी नेपाली
दलित होस् वा तागाधारी हामी नेपाली।

# (८) जन्तरेसरको टक्करी ट्वाक

मेरो सरस्वती डि.एस.बि. स्कुलमा शिशु कक्षामा धुलोमा कखरा सिकाउने जन्तरे सर नै मेरो पहिलो गुरु हुनुहुन्थ्यो। त्यसबेला कखरा लेख्ने काठको कालो पाटी हुन्थ्यो। कालो पाटीलाई कालो बनाइराख्न ब्याट्री फुटाएर भित्रको कालोलाई तोरीतेल मिसाएर काठमा पोतेर घाममा सुकाउनु पर्दथ्यो। विद्यालय जाँदा कालोपाटी च्यापेर जानु पर्दथ्यो। उक्त कालो पाटीमा चकले लेख्नु पर्दथ्यो। अक्षर मेट्नलाई कागज वा हातैले मेट्नु पर्दथ्यो। यस्तो अवस्थामा अक्षर कोर्नलाई हात समाएर सिकाउने काम जन्तरे सरले गर्नुभएको थियो। यसैले जन्तरे सर मेरो बालमस्तिष्कमा गहिरो छाप बनेर बस्नु भएको छ।

एकदिन कक्षाकोठामा प्रवेश गर्नासाथ जन्तरेसरले हामीलाई सोध्नुभयो। 'लौ भन ठूलो भएर तिमीहरू धनी हुने कि गरिब हुने?' शिशुकक्षामा पढ्ने हामी ट्वाल्ल पर्‍यौं। कक्षाका कसैले के भने कसैले के भने मलाई सम्झना छैन। तर यो प्रश्नले मलाई अनायास गम्भीर बनायो। मलाई धनीमान्छे खराब हुन्छन् यिनीहरूको भूँडी ठूलो हुन्छ। यिनीहरूले मानिसलाई दुःख दिन्छन्। हकार्छन् पुलिस लाउँछन् कुट्छन् कुटाउँछन् यस्तै सुनेको थिए। यत्तिमात्र हैन जाल गरेर घरखेत खोस्छन् भनेर डर देखाइन्थ्यो।

तर चारपाँच वर्षे त्यो मस्तिष्कमा गरिबको बारे मेरो बालमस्तिष्कमा प्रष्ट रूपमा छवि त बनेको भने थिएन। तैपनि धनीभन्दा गरिब नै राम्रो हुन्छ होला भन्ने ठानेर मैले पनि साथीहरूको स्वरमाथि स्वर थपें– "गरिब सर"। मैले गरिब कति दुःखी हुन्छन् होला भन्ने राम्ररी नबुझिकनै

स्फूर्त जवाफ दिएको थिएँ।

आज पनि मलाई गरिबका बारेमा कुरा गर्दा होस् वा गरिबबारे मनमनै तर्कवितर्क गर्दा होस्– जन्तरेसर र उहाँले उसबेला सोधेको सवाल र मैले उसबेला दिएको जवाफको झल्झल्ती याद आउँछ। मनमनै सोच्दछु तब एक मनले भन्छ त्यत्तिबेला 'कस्तो कुरै नबुझीकन जवाफ दिएँछु'। अर्को मन भन्छ 'ठीकै भो'। जे होस्, आज मलाई गरिबको पक्षमा कमसेकम उभिन, केही गर्न, बोल्न र लेख्न नै आनन्द लाग्छ।

उसबेला मलाई जन्तरेसरको टक्करी भने साह्रै नमीठो लाग्दथ्यो। सोधेको प्रश्नको जवाफ दिन नसकेमा टाउको थर्थर्किने गरी चोरऔला खुम्च्याएर औलाको डडेल्नोपाटाले टाउकोमा ठोक्दा दुई दिनसम्म दुख्दथ्यो।

आज पनि टाउकोमा हात पुर्‍याएर केश मिलाउँदा अर्थात कपाल कोर्दा बेलाबेला त्यै टक्करीको याद आउँछ। अचम्म! यसबेला त्यो टक्करीलाई सम्झदा मात्र पनि दुख्दथ्यो तर आज सम्झदा मात्र पनि बडो आनन्द आउँछ।

वास्तवमा उनले त्यसबेला टक्करी खुवाउँदै अक्षर नचिनाएको भए आज म यसरी अक्षरको खेती गर्न सक्दिनथें। मनका कुरा पनि मनमै रहन्थ्यो लेखेर देखाउन सक्दिनथें। आजकल कहिलेकाहि टाउको दुख्दा मेरी पत्नीलाई वा छोरालाई टक्करी हान्न लगाउँछु। सञ्चो भएजस्तो लाग्छ। जन्तरेसर अर्थात वीरबहादुर आङबुहाङ आज यो दुनियाँमा हुनुहुन्न तर उनको याद र टक्करी भने मेरो टाउको वरिपरि घुमिरहन्छ बेलाबेला छाम्छु पनि। र उनैलाई भेट्ने गर्दछु। जन्तरे सरको टक्करीले मलाई अक्षर खिप्न सिकायो। पढ्ने लेख्ने जग त्यसले बसायो। त्यसैले मेरो पढाइलेखाइ जतिसुकै माथि पुगे पनि त्यसमा जन्तरेसरको टक्करीको ठूलो हात छ।

उनै जन्तरेसर मेरा दिमागमा नमेटिने गरी बास बसेका छन्। उनले बाल्यकालमा दिएको आशिर्वाद आफूले पाएको अनुभूति भइरहन्छ। जन्म दिने मातापितातुल्य अक्षर चिनाउनेगुरूजनलाई हार्दिक नमन गर्दछु।

# (९) ती एक जोडी परेवा

"के तपाईले एउटा कुरा विचार गर्नु भएको छ?"

" के हँ?"

कुनै गम्भीर विषय वस्तु हो कि भनेर एक्कासि कुरा कोट्याउने मेरी श्रीमतीतर्फ म जिज्ञासु आँखा तेर्छ्याउँछु। उनी भन्छिन्– "जव कुनै चाडपर्व आउँछ तब यो निश्छल अर्थात् कान्छो छोरो प्रायः बिरामी हुने गर्दछ।

एक जोडी परेवा चढाउने भनेर भाकल गरेकी छु। जब–जब निश्छल बिरामी पर्छ तपाई घर नहुँदा मलाई असाध्यै डर लाग्छ। मैले मनमनै बूढासुब्बालाई भाकल गरिसकेकी छु। भाकल बमोजिम परेवा चढाएमा कतै छोरालाई रोगादीबाट राहत मिल्थ्यो होला। तपाई यसरी घर आएको बेला बूढासुब्बा मन्दिर धरान एक पटक जानु पर्ने!"

कान्छो छोरो निश्छल जब जन्मेथ्यो ठीक त्यही बेला मेरो सरुवा जागिरको क्रममा खोटाङ्ग दिक्तेल भएको थियो। आज निश्छल करिब डेढ वर्षको भयो। करिब एकदुई महिनामा घर झर्ने क्रममा यसपटक यो माघको मध्यतिर म आफ्नो घर विराटनगर झरेको बेला एकदिन बिहानको चिया पिउँदै गर्दा यसरी श्रीमतीले धरान जाने कुरा खोतल्दा म झल्यास्स भएँ।

निश्छल आमाको पेटमैं हुँदा उसकी आमाले भाकल गरेबमोजिम २ पटक जति कुखुराको भाले चढाईयो बूढासुब्बामा। त्यसैबेला मैले मनमनै गुनेंथें– यसरी कहिले दशैं कहिले

भाकलको निहुँमा धेरै कुखुराहरू भोग चढाइसकियो। टाउको पूजारीलाई छाडेर देउताको नाउँमा मासु खाइयो। यसरी हरेक पूजामा दिनहुँ काटमार गरिएका पशुपन्छीको रास देख्दा ती निरीह जीवहरूलाई बलि चढाएर पूण्य प्राप्तिको आत्मसन्तुष्टि लिनु मलाई उचित लागेन। अब उप्रान्त यहाँ आउँदा एक जोडी परेवा ल्याएर ईश्वर अर्थात् बूढासुब्बाको नाउँमा सुस्वास्थ्यको कामना गर्दै स्वयम् निश्छलको हातबाट कुनै अमूक तथा निर्दोष परेवाका जोडीलाई बन्धनमुक्त गर्नु बेश हो। यसरी पंक्षीलाई बन्धनमुक्त गरेर निलो खुल्ला आकाशमा स्वतन्त्र गरिदिनु नै धर्मप्राप्तिको राम्रो उपाय हुनसक्छ। यही अठोटका साथ त्यसैबेला मैले मेरी श्रीमतीलाई प्रस्तावित गरेथें– "हेर चञ्चला, यसरी पशुपंक्षीलाई ल्याएर भोग दिनुभन्दा परेवाको एक जोडी ल्याएर मन्दिर वरिपरि छाडिदिनु नै राम्रो लाग्यो मलाई त?"

त्यसैबेला मेरो प्रस्तावलाई स्वीकार गर्दै उनले समर्थन जनाईन – "ठीकै छ नि, परेवा ल्याई निश्छलकै हातबाट आकाशमा छाडौं न त। यस्तो चलन पनि छ। राम्रै हुन्छ।"

हो त्यसैबेला नै मैले कल्पेथें – त्यो बूढासुब्बाबाट छाडिएका परेवाजोडी दन्तकाली, पिण्डेश्वरी वरिपरिको रमणीय जंगलका आकाशमा उड्दै जंगल, खोला, खहरे चाहार्ने छन्। सायद मायाप्रिती गाँस्नेछन् अनि नयाँ संसार बसाउनेछन्। कहिले धरान बजारको रमझमको रमिता हेर्नेछन् कहिले खोला, बगर, जंगल, खोल्सामा लुकामारी खेल्दै निर्मल निलो आकाशमा कावा खानेछन्। कुनै दिन सायद तिनै परेवालाई हामी तल भुइँबाट चियाउँदै हेर्नेछौं र भन्नेछौं– ऊ .. त्यो सेतो परेवाको जोडी ... हामीले छाडेको ... त्यही हो! हेर त कति मज्जाले उडेको!" यसबेला ती परेवाले हामीलाई चिनेभने पक्कै हामीलाई धन्यवाद दिनेछन्।

यही आकांक्षा र आत्मबलले विराटनगरबाट बसबाट ओर्लेर बसपार्क नजिकैबाट एक जोडी परेवा किनेर चढ्छौं– विजयपुरको उकालो। मन्दिर पुगेर परेवालाई बूढासुब्बाको नाउँमा निश्छलको हातबाट नजिकै जङ्गलमा स्वतन्त्र छाड्ने कुराको जानकारी र अनुमतिको लागि मन्दिरका पूजारीलाई सविस्तार बताउँछु र अनुमति लिन्छु।

पूजारीहरूको ४।५ जनाको समूह छ। एक जना पूजारीले मन्दिर बाहिर दक्षिण पट्टिको मन्दिरको पर्खालको फेदमा एउटा सानो झ्याल आकारको खोपीभित्र राखिएका देउताका मूर्तिमा पानी छर्केर मूर्तिमा पग्लेकैं रङ्ग परेवाको शिरमा दलिदिन्छ। र अलि तल लगेर परेवाहरू उडाउने अनुमति दिन्छ। मन्दिरदेखि अलि तल दक्षिणतिर अवस्थित चौतारा जस्तै खुल्ला ठाउँमा झर्छौं। निश्छलका हातबाट ती दुई परेवाहरू हामी आमाबुबा, दाजुको सहयोगमा उडाइदिन्छौं भुरूरू...

तर बन्धनमा बस्दा कुँजिएर होला हामीले सोचेजस्तो ती परेवाहरू आकाशमा भुर्रर उडेर माथि जान सकेनन्। उडेर अलि पर त गए तर एकैछिनमा ती परेवाहरू पुनः हामीतिरै हिड्दै आउन खोजे। ती परेवाहरूलाई पुनः समातेर अलि माथि उँचाइमा पुग्नेगरी हुत्याइदिन म र चञ्चला परेवातर्फ लम्कन्छौं।

“खबरदार! अब ती परेवाहरू नछुनोस्, ती अब हाम्रा हुन्, हामी नै हेर्छौं।” पूजारीको यो खबरलारीले हामी खुट्टामा ठेस लागे झैंभयो र हामी अनायास रोकियौं। र छक्क पर्दै मुख हेराहेर गऱ्यौं।

यसपछि हामी उडाएर पनि उड्न नमानेर हामीतिरै आएका ती परेवाहरूलाई पूजारीहरूमध्ये एक जनाले नियन्त्रणमा लियो र बाँसघारीको फेदमा अड्याएर राखेको डोकोभित्र हाल्यो अनि बोराले छोपिदियो। म केवल टुलुटुलु हेर्न विवश छु। मेरा अनुहारमा देखिएका आश्चर्य र आक्रोशका रेखाहरू देखेर होला चञ्चलाले मलाई सम्झाइन “भैगो क्यै नभन्नोस्, यसरी चढाइसकेपछि हामीले क्यै बोल्नु हुदैन। हामीले हाम्रो कर्तव्य पूरा गऱ्यौं।” म अझै किंकर्तव्यविमूढ छु। अर्थात् अवाक् छु। मेरो क्रोध

शान्त पार्न चञ्चला मलाई सम्झाउँछिन्– “हेर्नोस् हामीले उडाए पनि त ती परेवाहरूलाई कसैले गेट्टिसले झार्न सक्दथ्यो। बाजले खान पनि त सक्दथ्यो।”

म यसो.. परेवालाई डोकोमा छोप्ने पूजारीको हाउभाउ, जिउडाल नियाल्छु। यत्तिबेला मलाई चञ्चलाले भनेकैं गेट्टिसवाला शिकारीहरूको प्रतिबिम्ब तिनै पूजारीहरूको अनुहारमा देख्छु, उनीहरूको हत्केलामा बाजको पञ्जा देख्छु। मेरा हातखुट्टा त्यसै गलेर आए। लामो सास तानें। र आँखा अन्तै मोडें।

अतृप्त र असन्तोषी पाइला चाल्दै बूढासुब्बा मन्दिरबाट फर्कियौं। खुट्टा त्यसै दुखेजस्तो लाग्यो। ओरालो हिंड्न पनि मन लाग्दैन। विजयपुर चोकमा पुगेर चिया पियौं। र धरान झर्न अघि बूढासुब्बातिर एकपटक फर्किहेरें। मन्दिरलाई ढाकेको बाँसको झ्याङ्ग ड्याम्म छ, वरिपरि जंगल झ्याम्म छ, अनि आकाश धुम्म छ, खै आज त एउटै पंक्षी पनि आकाशमा उडेको कतै देखिएन। सायद मेरो कल्पनाको आकाशबाट पनि परेवा कसैले लग्यो कि!

निश्छल एक्कासि रुन्छ, म झस्कन्छु। गर्मी भएछ क्यार। साथमा बोकेको टुम्लेटबाट पानी पिलाउँछु निश्छललाई अनि म पनि पिउँछु। तर खै मरो प्यास भने मेटिएन ...।

# (१०) धन्यवाद धराबासी

कुनै साहित्यिक रचनाले मानिसको जीवनमा कत्तिको दूरगामी प्रभाव पार्दोरहेछ भन्ने कुराको साक्षी म स्वयम् छु। तत्कालीन सोभियत संघमा चिकित्साशास्त्र पढ्न जाने तरखरमा थिएँ। तर म दोधारमै थिएँ। तोतेबोली बोल्न थालेको छोरो कौशल र अन्तरजातीय प्रेमविवाह गरेकी पत्नी चञ्चलालाई घरमा छाडेर जान मन मानेको थिएन। तैपनि पढ्न जाने रहरले मलाई चयनले बस्न पनि दिएको थिएन। काठमाडौ पुगें विदेश यात्रा तथा अध्ययनसम्बन्धी चाँजो मिलाउन। मेरा दुइ भाई कमल र दीपक पढ्दै थिए काठमाडौंमा। म पनि उनीहरूकै डेरा पाटनढोकामा बसें– यात्रा र छट्पटी बीच।

कुरो २०४५ साल भाद्रको हो। अचानक भूकम्प आयो। घरपति साहुनी नेवारी भाषामा हामीलाई गुहार मागेर फलाक्तै रूँदै भऱ्याङ्ग ओर्लिन्। बूढीसाहुनीलाई हामीले पनि समात्दै घरबाहिर निकाल्यौं र हामी पनि निस्कियौं। बाहिर निस्किसक्दा भूकम्प पनि थामियो। खल्याङ–बल्याङ भयो चोकचोकमा मानिस निस्किए। वरिपरि कतै अप्रिय घटना घटेनछ। सुरूमा भूकम्प आउँदा भूकम्प नै आएको हो कि! के हो! निकैबेर हामी अल्मलिएका थियौं। पछि कोठामा बसेर त्यत्रो भूकम्प आएको सुरुमै थाहा नपाएको सम्झेर हामी तीनै भाइ मरिमरि हाँस्यौं। त्यत्तिखेर हामीलाई त एकप्रकार रमाइलो नै पो भयो।

उज्यालो भयो। चिया खान पाटनढोका गयौं। निकै खल्याङ्ग बल्याङ्ग छ। कुरो बुझ्दा थाहा भयो धरानमा घरले किचेर निकै मानिस मरेछन्। आफन्त हुनेहरूले टेलिफोनबाट धरानको घटना तत्काल थाहा पाएछन्। चिया खान आउने हामी सबैले रेडियो नेपालको सात बजेको समाचार चिया पसलमा सुन्यौं। र स्तब्ध भयौं। पछि नौबजेको समाचारमा तेह्रथुममा पनि मानिस घरले किचेर मरेको सुनियो। एकबजेको समाचारले त उदयपुर ताप्लेजुङ्गलगायत पूर्वाञ्चलमा निकै धनजनको क्षति भएको थाहा भयो।

नेपाल दूरसंचार संस्थानको त्रिपुरेश्वर कार्यालयमा काठमाडौं बस्ने विद्यार्थीको ता“ती लागेको छ। दुर्गम जिल्लाका आफन्तको

हालखबर नभए पनि कमसेकम समग्र आफ्नो गाउँको हालखबर बुझ्न सबै आतुर छन्। एकछिन् त पालेले गेटमा भीड रोक्यो तर विद्यार्थीको अत्यधिक भीड र आक्रोशलाई पालेले गेटमा नियन्त्रण गर्न सकेन। भीड सिधै आ.वा. अपरेटरकक्षमा पुग्यो। अपरेटरहरू पनि जिल्ला जिल्लामा सम्पर्क गर्न ब्यस्त भए। ताप्लेजुङ्गका तत्कालीन माननीय विष्णु मादेन स्वयम् ताप्लेजुङ्गको आ.वा.अफिसमा बसेर ताप्लेजुङको समाचार भनिदिदै थिए।

तेह्रथुममा भरखरै विवाह गरेर गएकी मेरी गाउँले टंकीबैनी सुतेकै ठाउँमा किचिएर मरिछिन्। अरु धेरै मरेछन्। जेहोस्, त्यसबेला भूकम्प प्रभावित जिल्लामा तत्कालीन नेपाल दूरसंचार संस्थान अथवा आ.वा.अपरेटरहरूले जनतालाई साह्रै ठूलो गुन लगाए।

बजारबाट नयाँ "मधुपर्क" किनेर ल्याएँ। कृष्ण धराबासीको "बालक हराएको सूचना" निबन्ध पढें। निबन्धले मेरो मन छोयो। जसले अन्ततः मेरो जीवन यात्राको मोड नै बदलिदियो। धाराबासीको बालक हराएझैं म पनि हराउन के बेर! चाहिएको बेला अभिभावकत्व दिन नसक्ने बुबा, मायाप्यार दिन नसक्ने पति सात वर्षसम्म पलायन हुनु भनेको के हराउनु हैन र! उनीहरूको आशा सपना सुन्ने कान, समस्या छेक्ने छाती सबै बोकेर म अन्यत्र जाँदैछु त्यति लामो अवधि। उनीहरू मेरो रहरको वायुपंखी घोडालाई केवल ट्वा" परेर हेरिरहेछन् आकाशतिर फर्केर– केवल शून्यमा उदाउने अस्ताउने जूनतारालाई झैँ।

जूनको छायाँले मात्र मन कहाँ शीतल हुन्छ र! भोलि म सात वर्ष पछि फर्केर आउँदा मेरो छोरोले मलाई चिन्ने छैन। मेरी पत्नीले मलाई विदा गर्दाको पतिको रूपमा पाउने छैनन्। म त्यसबेला धराबासीको हराएको बालकभन्दा के नै फरक भएँ र! मैले अब रुस जाने रहर त्यागें।

ताप्लेजुङ्ग चाँगे गा.वि.स.स्थित दोभानमा भूकम्पको बेलामा रहेका मेरो परिवार सुतेको सिरानीमा नै दलिनको प्वालमा सिउरी राखेका इँटाहरू खसेछन्। त्यो इँटा मेरो छोरोको शिरमा खसेको भए अथवा मेरी चञ्चलाको निधारमा खसेको भए के म उनीहरूलाई फेरि भेट्न पाउथें? यदि एकबित्ता नजिक इँट्टा झरेको भए मेरो लागि उनीहरू निश्चय हराउँथे उक्त निबन्धमा हराएको वालक झैं। यसरी धराबासीको निबन्धले मेरो मनमा ठूलो आँधीबेरी र हलचल ल्याइदियो। जसले अन्ततः मलाई मेरो परिवारकै किनारपट्टि पाखा लगाइदियो मलाई।

आज दुई दशक बढी भएछ। तिनै धराबासी जसलाई मैले हृदयको एउटा कुनामा माया गरेर राखेको थिएँ तर अझसम्म देखभेट र परिचय चाहिँ भएको थिएन। आज उर्लाबारी मोरङको एउटा साहित्यिक कार्यक्रममा उनलाई पहिलोपटक भेटें। परिचय भयो। मलाई अतीतको याद आयो। अतीत सम्झेर मेरो छाती र गला भारी भएर आयो। कार्यक्रममा मलाई पनि दुई शब्द बोल्ने मौका दिइयो। मैले उनको "बालक हराएको सूचना"ले मेरो जीवनमा ल्याएको मोडको बारेमा केही चर्चा गरें। मैले आजसम्म आफैमा सीमित राखेको एउटा रहस्य सबैसामु सार्वजनिक गरें– आज। मेरो मन बल्ल आज एकप्रकारले हलुङ्गो भएर आयो।

आज धराबासीले लगाएको गुनले निश्चय मलाई फाइदा गरेको छ। एकप्रकारले भन्नुपर्दा मलाई भन्दा अझ फाइदा त मेरो छोरो कौशल र पत्नी चञ्चलालाई पो भएको छ। तर कस्तो बिडम्बना, जसलाई बढी फाइदा पुग्यो त्यो कुरा न फाइदा हुनेहरूलाई नै थाहा पत्तो छ न त उता स्वयम् गुन लगाउने कृष्ण धराबासीलाई यसको सुइँको छ। केवल मलाई मात्र थाहा छ। अर्थात् थाहा थियो।

जसलाई मैले आज अभिलेखकै रूपमा लेखनकार्य गरें। हाल विदेशमा बसेको मेरो छोरो कौशलले यो पढेर के कस्तो कल्पना गर्ला! लगभग २४ वर्षे दाम्पत्य जीवनमा कत्ति कत्ति के के मनका कुरा खोलियो तर यो कुरा लुकाएर यतिञ्जेलसम्म एक्लै राखेर सुटुक्क पत्रिकामा छापेको पढ्दा मेरी पत्नी चञ्चलालाई कस्तो लाग्ला!

जे होस् धरावासी! मैलें आज बीसवर्ष पछि मैले मेरो मनको कुरा खोलें अर्थात् लेखें। यो पढेर अब मेरो परिवारले तिमीलाई अवश्य धेरै धेरै धन्यवाद दिनेछन्। ऐलेलाई स्वीकार मेरै तर्फबाट– धन्यवाद धराबासी!

# (११) जदौ दाहाल यज्ञनिधि

जीवनको आकाशमा निराशाका बादल नदेख्ने मानिस सायदै होलान्। म पनि आकाशमा कहिलेकाहिँ कालो बादल देख्थे गर्दछु। क्षितिजैसम्म डम्म ढाकेर बसेका बादलमा चाँदीका घेरा पनि देख्छु र यसैलाई हेरेर बाँच्ने बल प्राप्त गर्दछु। मेरा मनका क्षितिजमा चाँदीको घेराझैं चम्किरहनेहरूमा मनले खाएका सामान्य मान्छेहरू छन् साहित्यकार छन्, कलाकार छन् जसको रचनाले विचारले मलाई जीवनमा सधैं आत्मबल र हौसला दिइरहेको छ। यिनका विचार सुन्दा, रचना पढ्दा र तस्वीर हेर्दा मात्र पनि छाती गमक्क फुलेर आउँछ मन त्यसै गद्गद् भएर आउँछ। मेरो मनभित्र आफ्नो स्थान बनाएर बसेका एक साहित्यकार हुन्– दाहाल यज्ञनिधि।

तीसको दशकमा रेडियो नेपालमा साह्रै सशक्त र लोकप्रिय कार्यक्रम– एउटा “घटना र बिचार” र अर्को “साहित्यिक कार्यक्रम” थियो। त्यसबेला रेडियो नेपालमा साहित्यिक कार्यक्रम दाहाल यज्ञनिधिले संचालन गर्दथे। उनको कार्यक्रमले श्रोतालाई मोहनी नै लगाएको थियो। जो पनि उनको नौलो

वक्तृत्व शैलीको चर्चा गर्दथे। यसो हुनाका केही कारणहरू थिए। पहिलो कारण थियो उनको जदौ सम्बोधन। दोश्रो थियो उनको प्रखर वाचनशिल्प र तेश्रो थियो उनको ओजपूर्ण आवाज, अनि साहसीपन् आदि। म पनि यो कार्यक्रम चाख मानेर नियमित रूपमा सुन्ने गर्दथें। यस्तै ३८ सालतिर मैले एउटा कविता रेडियो नेपालको साहित्यिक कार्यक्रममा पठाएँ। एकदिन साहित्यिक कार्यक्रममा शीर्षक बिनाको एउटा कविता र नाम उनले रेडियो नेपालमा वाचन गरिदिए। त्यसबेला पो म झस्किएँ, मैले त हतारमा कविताको शीर्षकै नलेखी पठाएँछु। जुन कविता हालै प्रकाशित "जीवन मेरो शब्दकोशमा" "प्रस्ताव" शीर्षकमा प्रकाशित पनि भएको छ। जुन कुरा सम्झदा पनि मलाई आज रमाइलो लाग्छ। उक्त कविता यस्तो थियो।

तिम्रो न्यानो छातीमा
बिसाएका मेरा सपनाहरू
वसन्तमा फुल्ने फूलहरू हैनन्
जसलाई शिशिरले झार्न सकोस्
लालुपाते र बाबरी होइनन् माया
जो वर्षैपिच्छे टिप्न सकियोस्
वर्षेनी लाग्ने मेलामा धाउँदा
मायाको गलबन्दी लाउँदा
दुनियाँको नजर लाग्यो मायालु
आऊ वरपीपल रोपौं मायाको चौतारीमा
दुईटा ढुँगा थपौं मायाको देउरालीमा।

रेडियो तथा पत्रपत्रिकामा दाहाल यज्ञनिधिका लेख रचना पढेर सुनेर एक प्रकारको भावनात्मक नाता गाँसिएको थियो उनीसँग। देशमा राजनीतिक सत्ता परिवर्तन पटक पटक भयो। उनी रेडियो नेपालबाट कहिले आए अनि कहिले हराए। एकदिन मंैले सुनें उनी मृगौलाको रोगको उपचार गराउन नपाएर छट्पटिएका छन्। उसबेला मेरो मन त्यसै खिन्न भयो। मैले केही सहयोग गर्न सकिन केवल मनमनैको शुभकामनाबाहेक।

संखुवासभा जिल्लामा काम गर्दैथें। एकदिन एउटा मित्रको कोठामा साहित्यिक भित्तेपात्रोमा उनैको एउटा कविता "मगर्नी मैया" देखें, पढें खुब मनपऱ्यो मैले त्यो क्यालेण्डर साल

सकिएपछि पाउने आसय मित्रसमक्ष राखें, उनले उक्त भित्तेपात्रो मलाई उपहार दिए। मैले उनको "मगर्नी मैया" कविता कटिङ्ग गरेर राखें।

यो भन्दा अरु नाता मेरो उनीसँग केही थिएन। सम्झन्छु यो त केवल भावना हो। एकपक्षीय प्रेम जस्तो। विशिष्ठ गायक तथा सँगीतकार बच्चु कैलाशलाई म असाध्यै मन पराउँछु तर कतै भेटेमा उनले मलाई नचिन्न सक्छन्, मन नपराउन पनि सक्छन् मलाई बस्। मनभित्रको भावनाको संसार बेग्लै हुन्छ। जसलाई देखाउन र व्यक्त गर्न पनि अप्ठेरो हुन्छ। तैपनि यसले जानेर वा अन्जानमै जीवन हिड्ने बाटो देखाउँदो रहेछ र जगत हेर्ने दृष्टिकोण समेत बनाइदिंदो रहेछ।

एउटा सांगीतिक एलबम् निकाल्ने परिकल्पनामा छु। "चुङ्गवा दोभान" लोकगीति एल्बम्बाट ख्याति कमाएका हाल काठमाडौमा बस्ने मेरा गाउँले भाइ खगेन्द्र यक्सोसँग एकदिन काठमाडौंमा भेट भयो। उनले मेरो कवितासँग्रह "जीवन मेरो शब्दकोश" को कुरा उठाए। उनले "दाहाल यज्ञनिधिसँग कार्यक्रम गर्नुपर्दछ है दाइ!" भनेर सल्लाह दिए। मलाई अप्ठेरो लाग्यो। उहाँसँग भावनाको नाता त थियो तर देखभेट छैन परिचय छैन। मैले उनलाई भनें– "पहिले मेरो पुस्तक उहाँलाई पढ्न दिउँ त्यसपछि उहाँले के कस्तो प्रतिक्रिया दिनुहुन्छ। मन पराउनु भयो भने समय दिनुहोला अनि जाउँला नि!" भनेको भालिपल्टै फोन आयो। "दाइ तपाइको कवितासङ्ग्रह दाहाल यज्ञनिधिले मन पराउनुभएछ। तपाइको र वहाँको अनुकूल समय मिलाएर रेडियो नेपाल जानुपर्ला। वहाँले निमन्त्रणा गर्नु भएको छ।"

दाहाल यज्ञनिधिसँग केही दिनभित्रै भेट भयो, चिया खायौं, फोटो खिचायौं। मृगौलाको स्वास्थ्यस्थितिको कारण उहाँ खानेकुरामा निकै सचेत हुनुहुँदोरहेछ। उहाँले भन्नुभो "नवराजजी म तपाईसँग एक अङ्क साहित्य र अर्को अङ्क लिम्बू संस्कृतिबारे गफ गर्छु है।" सुनेर मलाई रमाइलो लाग्यो अलि अप्ठेरो पनि।

भोलिपल्ट दुईबजे सिंहदरबारको पूर्व गेटमा लिन आउछु भन्नु भएथ्यो। म आधा घण्टा अघि नै गेटमा पुगें। गेटमा छिर्ने निस्कने मान्छेको रमिता हेरें। मनमा नानाथरि कल्पना गरें। यो गेट पहिला बनेको थिएन। पहिले हामी मूलगेटबाट क्या शानले निसंकोच ओहोरदोहोर गर्ने गर्दथ्यौं

रेडियो नेपाल छिर्दा। आज त सबैको खानतलासी हुन्छ। गेटमा बस्ने ड्युटीवाल सबै आगन्तुकलाई शंङ्काकै नजरले हेर्दछन्। ठीक दुईबजे दाहाल यज्ञनिधि गेटमा आउनु भयो। म उहाँको पछिपछि गएँ अतीत सम्झँदै।

एउटा स्टूडियोमा हामी दुईजना अन्तरवार्ताको लागि बस्यौं। उता प्राविधिक सुलोचना बज्राचार्य रेकर्ड गर्दै हुनुहुन्थ्यो। हुन त उहाँले हामी दुई दिनको लागि दुईवोटा कार्यक्रम रेकर्ड गर्नेछौं भन्नुभएथ्यो। तर बोल्दै जाँदा कुरा दुई अंकमा सकिएन। “हैन धितै मरेन पो! अझै एउटा अंक थप बनाउ है नवराजजी!” भन्नु भो मैले पनि “हुन्छ” भने र हामीले करिब दुई घण्टामा तीन अंक कार्यक्रमहरू रेकर्ड गर्‍यौं।

म अन्तरवार्ता दिँदैथिए। पहाड पुगेको थिए। आमा सम्झँदै थिएँ। कार्यक्रममा “आमाको तिर्सना” कविता वाचन गरें। स्टूडियोमा कविता वाचन गर्दा बीचमा मलाई अलि अप्ठेरो महसुस भयो मेरो गला वाचन गर्दागर्दै अबरुद्ध भयो। म कविता वाचन गर्दागर्दै अलि भावुक बनेंछु क्यार। मलाई दाहाल यज्ञनिधिले पुलुक्क हेर्नुभयो। उहाँले थाहा पाउनु भो कि भनेर झस्किएँ र ठानें श्रोताले त पक्कै थाहा पाउँदैनन् होला। पछि विराटनगरमा गजलकार खेम नेपालीसँग एकदिन भेट भयो। उहाँले प्रसारित कार्यक्रमबारे चर्चा गर्दै वाचन गर्दा बीचमा मेरो गला अबरुद्ध भएको कुरा उठाउनु भयो। लाग्यो, श्रोताले प्रस्तुित ध्यान दिएर सुन्दारहेछन्।

रेडियो नेपालबाट हुने प्रसारणको पूर्वसूचना मोबाइलद्धारा एस.एम.एस. गरेर मेरा निकटतम् मित्र र साहित्यकारहरूलाई दिएको थिएँ। रेडियो नेपालबाट “समाजको मझेरीमा” कार्यक्रमअन्तर्गत पहिलो अंक जहाँ “आमाको तिर्सना” वाचन गरिएको उक्त कार्यक्रम सकिनासाथ काठमाडांैबाट मोबाइलमा

फोन आयो “अङ्कल! मलाई तपाईको कविता साह्रै मन पर्‍यो” म छक्क परें। नचिनेको कुनै किशोरीको तर गम्भीर ध्वनी छ। लाग्यो उनी अलि अबरुद्ध गलाले बोल्दैछिन् र मलाई आभार र धन्यवाद दिंदै थिइन ती अपरिचित किशोरीले। पछि थाहा भयो मैले नै अघि एस.एम.एस. गरेको मेरो हितैसी मित्र हीरा शर्माकी छोरी रहिछन् उनी। मैले पनि उनलाई धन्यवाद दिएँ।

प्रसारित उक्त अन्तवार्तालाई लिएर धेरैले फोनबाट धन्यवाद र बधाइ दिए त्यो दिन। तर विराटनगरबाटै येहाङ्ग लावतीजीले हाँसीहाँसी भन्नुभो– “हैन मेरो त आँशु पो झरेछ तपाइको कविता सुन्दासुन्दै। कतिपय चलन त मैले पनि पो भुलेंछु तपाइको कविताले सम्झाउँदा पो झस्किएँ।” मलाई यी दुइ जनाले व्यक्त गरेका अभिब्यक्तिले मेरो मन बिशेष छोयो।

त्यसपछि मैले फेरि सम्झिएँ दाहाल यज्ञनिधिलाई। आजसम्म मेरो कवितासँग्रहमा रहेको “आत्महत्या गर्नअघि” को बारेमा कसैले चर्चा गर्छ कि भनेर निकै आशा गर्दथें। तर अरू कविताहरूको निकै चर्चा भयो तर यसको कमै भयो। म अचम्म मान्दथें म साँच्चै एक्लै रहेछु। दाहाल यज्ञनिधिले मलाई उक्त कविताको बारेमा कार्यक्रममा मात्र होइन सिंहदरबार निस्कने बेलामा पनि निकै सोध्नु भयो र भन्नु भयो “तपाईको यो कविता नेपाली साहित्यमा नौलो स्वरूप र शैली लिएर आएको छ जसलाई मैले राम्ररी बुझें किनभने मेरी बहिनीले पनि सेनाको बलात्कारको पीडाले आत्महत्या गरिन्।” मैले यसबेला सम्झें वास्तवमा संसारमा म एक्लो रहेनछु। उक्त “आत्महत्या गर्न अघि” कविताको एक अंश यसप्रकार छ।

आमा!<br>
वेदना र प्रसवकी प्रतिमूर्ति<br>
म संतान तिम्रो<br>
निरन्तर मृत्युन्मुख<br>
आज आत्महत्या निकट छु<br>
उसबेला सीतालाई मुक्ति दिने<br>
धरती आज मेरो सामु फाट्छ<br>
आफ्नै माया नलागे पनि आमा<br>
मलाई तिम्रो माया लाग्छ।

२०६३ साल चैत्रमा कामविशेषले काठमाडौंमा गएको बखत “समाजको मझेरीमा” कार्यक्रमको लागि रेडियो नेपालमा अन्तरवार्ता दिएँ र विराटनगर आएर कार्यक्रम सुनें र सुनाएँ। निकै जनाले स्याबासी दिए। मैले पनि आफ्नो कर्तब्य निर्वाह गर्न दाहाल यज्ञनिधिलाई टेलिफोनबाट “धन्यवाद है सर” भनें र खुशी

व्यक्त गरें। उहाँ पनि उत्तिकै खुशी हुनुभो र भन्नुभो– "तपाई यतिञ्जेल लुकेर बस्नु भएको रहेछ, सबैसामु राखियो आनन्द लागेको छ।"

यसरी मैले कल्पना गरेको दाहाल यज्ञनिधि र भेटेको दाहाल यज्ञनिधि उस्तै रहेछन्। उनको सरलता र विशिष्टतालाई जदौ!

# (१२) साहित्यकार इमान्दार हुन्छ

देशको लागि इमान्दारीपूर्वक बोल्ने लेख्ने फुर्सद साहित्यकारलाई मात्र हुन्छ। जीवन र जगतका यावत विषयवस्तुमा सोच्ने र आफ्ना भावना पोख्ने साहित्यकार नै हुन्। साहित्यकार सत्ताको सदा प्रतिपक्ष हो। यस्ता भनाइहरू निस्किए धरानका बद्री पलिखेसँगका कुराकानीमा। कुराकानीमा बद्री पलिखे, विजय कट्टेल 'छहरा' र म गरी तीनजना वहाँकै पुतलीबजारस्थित निवासमा पुष ६ गते बस्यौं।

माथिका भनाइमा मैले पनि सहमति जनाउँदा जनाउदै पनि साहित्यकार सत्ताको सदा प्रतिपक्ष हुनुपर्छ भन्ने भनाइसँग म पूर्ण सहमत छैन। तर मैले त्यो धारणा व्यक्त गर्न औपचारिक परिचय आजै भएका पलिखेसमक्ष राख्न उचित ठानिन"। किनभने साहित्यकारलाई समय र परिस्थितिको सापेक्षमा सदा प्रतिपक्षको रूपमा मात्र साहित्यलाई उपयोग गर्नु अलि पूर्वाग्रही सोंच हो। सत्ताले सदा नराम्रो काम मात्र गर्छ वा सत्ता नराम्रो कुरा हो वा सत्ताले राम्रो गर्न सक्दैन भन्ने अवधारणाले प्रजातन्त्रको मान्यतालाई विश्वास नगरेको देखिन्छ। यसकारण साहित्यकारले चाहे सत्ता वा व्यक्ति वा समाज जसले राम्रो वा नराम्रो गरेको छ भने त्यसलाई बिना पूर्वाग्रह प्रतिक्रिया दिनुपर्दछ भन्ने मेरो मान्यता छ।

भेटको अवसरमा पलिखेले साझा प्रकाशनको भवन निर्माणस्थलका लागि जग्गा खोजिदिने काममा निकै पहल

गर्नुभएको कुरा बताउनुभयो। भवन निर्माणस्थलका रूपमा जग्गा खोजी गर्दा त्यत्रो भूमिका निर्वाह गरेर पनि उद्घाटनको अवसरमा उनलाई धन्यवादसम्म दिन पनि साझा प्रकाशनले कन्जुस्याई गरेको गुनासो सुनाउनु भयो। आफ्ना सबै दाजुभाइले व्यापार व्यवसाय गरेर बसेका छन्। बिल्डिङ बनाएका छन्। आफू पुरानो काठकै घरमा बस्याछु, साहित्य साधनामा जीवन बित्यो भनेर भन्नुभयो। वहाँले आफू तीनजना छोरी र श्रीमतीका साथ छु, कविता सुन्ने मेरो पहिलो श्रोता श्रीमती हुन्। तर मेरो साहित्य साधनाप्रति मेरी श्रीमती र तीन छोरी सन्तुष्ट नरहेको बताउनुभयो। सुनेर मलाई नरमाइलो लाग्यो। आफ्नो शेषपछि आफ्ना कृतिहरूको संरक्षण तथा प्रकाशन हुने वा नहुने हो भनेर उहाँ चिन्तित हुनुहुन्थ्यो। उहाँका कुराले मलाई अत्यन्त भावुक बनायो।

गफगाफको क्रममा विजय 'छहरा'जीले साहित्यकार अगाडि बढ्न पत्रकार बन्नुपर्छ भन्ने धारणा राख्नुभयो। मैले त्यसमा ठाडै बिमति जनाएँ। पत्रकारिता र साहित्य साधनाको लक्ष्य नै फरक–फरक छन्। पत्रकारितामा व्यवसायिकतातिर बढी गाँसिएको हुन्छ तर साहित्य जीवन र जगतलाई लक्ष्य लिएर बढेको हुन्छ। पत्रकारिता र साहित्यका विषयवस्तुका प्राथमिकता सूचीमा भिन्नता हुनसक्छन्। प्रस्तुतिमा कला र लक्षितसमूह फरक हुनसक्छन्। समाजले साहित्यकार र पत्रकारलाई हेर्ने दृष्टिकोण पनि फरक छ। मेरो यो विचारप्रति पलिखेले पनि समर्थन गर्नुभयो। उहाँले मेरो भनाइको समर्थनमा केही उदाहरण प्रस्तुत गर्नुभयो। धरानमा राम्रा साहित्यकार पत्रकारितामा लागेर उहाँहरूले साहित्य–सौन्दर्य गुमाएका छन् भनेर सुनाउनु भयो।

साहित्यकार कुनै सिद्धान्त, वाद वा विचारबाट प्रभावित भएमा सुन्दर सिर्जना सुक्दै जाने र नारा फुक्दै जाने हुन्छ। त्यसकारण यसमा लेखक सचेत हुनुपर्दछ।

# (१३) स्रष्टाप्रति समाजको अपेक्षा

एकदिन एउटा सांस्कृतिक कार्यक्रमको प्रहसनमा उत्कृष्ट अभिनय गर्ने कलाकारलाई पुरस्कार दिइयो। पुरस्कारको कभर अत्यन्त आकर्षक र त्यसको आकार पनि भकुण्डो जत्रै थियो। म सानो बालक थिएँ उसबेला मैले पनि सोचें पुरस्कार कुनै गतिलो चिज होला। आजभन्दा झण्डै चार दशक अघि म विद्यालयमा पढ्दाको घटना म सम्झँदैछु।

प्रधानाध्यापक गणेशबहदुर राईले पुरस्कार वितरण गरेपछि पुरस्कार विजेतालाई एउटा सर्त राखे। सबैको सामु पुरस्कार खोलेर प्रदर्शन गर्न भनियो। प्रहसन विजेताले पुरस्कारको कभर खोल्दै गए हामी ताली पिट्दै थियौं। खोल्नै मात्र उनलाई कम्तिमा पाँच मिनेटभन्दा बढी समय लागेको थियो। उनको प्रहसनको अनुहार सम्झँदै उनले पुरस्कारको पत्र प्याजको पत्र खोलेझैं खोल्दा त्यसबेला हामी सबैलाई पुनः अर्को प्रहसनको प्रस्तुति जस्तै लागिरहेथ्यो। अत्यन्त रोमाञ्चक थियो त्यो क्षण। अन्तमा उनले त्यसभित्र एउटा चीज पाए र सबैलाई देखाए– भित्र एउटा सानो रबरको भकुण्डो रहेछ। हामीलाई झनै रमाइलो लाग्यो सबै पेट मिचिमिचि हाँस्यौं– गललल। यसैबीच उनले भकुण्डोलाई गोलपोष्टतिर हानिदिए। हामी केटाकेटी उक्त भकुण्डो टिप्न छिनाझप्टी गर्दै थियौं उसबेला।

आज मलाई कतिपय रचना सुन्दा, पढ्दा पनि यस्तै खालको रमाइलो लाग्छ। सभा गोष्टीमा रचना सुनेर ताली पनि जोडजोडले पिटिन्छ। मनोरञ्जन पनि लिइन्छ। तर बाटोमा फर्कदा आफैलाई सोध्छु यसमा मैले के पाएँ? समाजले के पायो? यसभित्र दृष्टिकोण के कस्तो थियो? आदि इत्यादि। प्याजको पत्र खोल्दा केही हात नलाग्ने तर खाँदा सधैं स्वादिलो प्याजझैं लाग्ने रचना लेख्न र पढ्न नै हामीलाई मन पर्छ किन!

एउटा कुरा सबैलाई थाहा छ सगरमाथाको शिखर चुमे पछि चचुरोमै अडिएर धेरैबेर टिक्न सकिदैन। यसैलाई दृष्टान्त मानेर कतिपय स्रष्टा एकपटक चुचुरो चुमेको अनुभव गरेपछि सिर्जना गर्नमा जानीजानी निस्कृय हुन्छन्। कतै चिप्लिएला वा लडिएला र लाज होला कि भनेर सचेत बन्छन्। आफूले पाएको प्रसिद्धि र पुरस्कार सम्झेर आत्मरतिमा दिन बिताउँछन्। तर ती स्रष्टालाई नेपालकै बहादुर सन्तानको हेक्का छैन जसले सगरमाथाका टुप्पो एकपटक चुमेर पनि कहिल्यै चित्त बुझाएनन् र कैंयौंपटक शिखर चुमेर विश्व कीर्तिमान राखेका छन्।

हाल बलिउडमा भएको एउटा घटनालाई पनि म दृष्टान्तको रूपमा लिन चाहन्छु। एउटा सर्वेक्षणले देखाए अनुसार हाल अभिनेता शाहरूख खान लोकप्रियताको शिखरमा छन्। अर्कातिर अमिताभ बच्चन ६० वर्ष नाघेका उमेर ढल्केका दोश्रो लोकप्रिय अभिनेता छन्। आज शाहरूख खान चलचित्र जगतका वादशाह पनि मानिन्छन्। यसै सन्दर्भमा एउटा अन्तरवार्तामा अमिताभ बच्चनले भने– ‘शाहरूखको वास्तविक मूल्याङ्कन अबको ३५ वर्ष पछि गर्नु राम्रो होला।’

**अमिताभका अनुसार मानिसको प्रतिभाको मूल्याङ्कन उसको समग्र जीवनको उर्जा, उपलब्धि र योगदानलाई समेटेर गर्नुपर्दछ। वास्तवमा स्रष्टा र खेलाडीमा फरक के छ भने खेलाडीको प्रतिभा प्रदर्शनमा उमेरको अर्थ रहन्छ तर स्रष्टाको सिर्जनामा उमेरको खासै अर्थ हुदैन। मर्ने बेलामा पनि सर्जक राम्रा सिर्जना गरिरहेकै हुन्छ। कतै सिर्जना फितलो होला कि भनेर कसैले तर्सनु राम्रो होइन भन्ने कुराको दृष्टान्त अमिताभ बनेका छन्।**

अमिताभ बच्चन बुढेसकालमा पनि प्रतिभाको प्रदर्शन गरिरहेछन्। उनलाई शाहरूखको जस्तो भूमिका सम्भव छैन तर उनले आफ्नो उमेर सुहाउँदो उत्कृष्ट अभिनय गरेका छन्। उनले यदि म बूढो भएँ मेरो बैंशको जस्तो स्तरीय अभिनय गर्न नसकिएला भनेर अभिनयबाट हात झिकेका भए अमिताभ आजको अमिताभ हुने थिएनन्। आज शाहरूख वादशाह छन् भोलि कोही होला तर जीवनको यति लामो कालखण्डसम्म निरन्तर अथक रूपमा क्रियाशील अमिताभलाई नै समर्पित र लगनशील प्रतिभाको प्रतीकको रूपमा दर्शकले लिएका छन् र लिनेछन्।

कतिपय स्रष्टाहरूमा एक प्रकारको सजगता हुँदोरहेछ। पहिला हतारमा कृति प्रकाशन गरेर पछि पछुताउनु हुँदैन भन्ने उनीहरूमा सचेतना पाइन्छ। रचना राम्ररी परिष्कार र धैर्य गरेर प्रकाशन गर्नुपर्छ। नत्र हतारमा लङ्गडो कृतिलाई जीवनभर बोकी हिंड्नु पर्छ भन्ने उनीहरूको धारणा छ। एकातिर यस्तो मान्यता छ भने अर्कातिर स्थापित स्रष्टाहरू आफ्नो स्तर घट्ला कि भनेर निरन्तर लेख्न डराउँछन् लेखिहाले पनि प्रकाशन गर्न डराउँछन्। कतिपय रचना लेखेर पनि च्यातेर फालिन्छन्। साहित्यमा यो सजगताले निकै पश्रय पाएको छ।

मान्छे जन्मन्छ सिक्छ केही जान्दछ लेख्छ फेरि सिक्छ लेख्छ लेखन अभ्यास हो जुन चक्र जीवनभर चलिरहन्छ। मानिसको उर्जा र प्रतिभाको प्रदर्शन कुनै एक कालखण्डमा उच्चस्तरमा

पुग्ला। त्यसपछि उसको उर्जा र प्रतिभामा एकरूपता नभई घटबढ हुनसक्दछ जो स्वभाविक हो। यो प्राकृतिक नियम हो। मानिसको सिर्जना वा लेखन कहिल्यै पनि सर्वगुण सम्पन्न हुनसक्दैन जसमा सुधारका गुञ्जायस सधैं रहिरहन्छन्।

सबैले बुझ्दछन् मानिसले सधैं एकनासको अर्थात एकै स्तरको रचना सिर्जना गर्न सक्दैन। उसको उमेर अनुभव समय परिस्थिति, वातावरण तथा स्वास्थ्यस्थितिले पनि लेखनमा प्रभाव पार्दछ। कुनै श्रेष्ठ कविले ऊ सानैदेखि राम्रो लेख्दथ्यो मर्ने बेलासम्म पनि उत्तिकै स्तरीय लेख्नुपर्दछ भनेर सदा आशा गर्न सकिंदैन। फेरि स्रष्टाले आफ्नो रचना पहिलेको लोकप्रिय रचनाभन्दा कमस्तरको छ भनेर स्वमूल्याङ्कन गरी पछिल्लो रचनालाई आफैले च्यात्नु पनि राम्रो होइन। कुनै सिर्जनाको मूल्याङ्कन सर्जकले भन्दा पाठकले नै राम्ररी गर्नेछन् भनेर विश्वास गर्नुपर्दछ भन्ने मेरो मान्यता छ।

स्रष्टाले सधैं राम्रो मात्र लेख्छु वा लोकप्रिय रचना मात्र लेख्छु भन्ठानेमा यसले ऊ आफैलाई र पाठकलाई अन्याय हुनजान्छ। पाठकले के बुझ्दछ भने स्रष्टा पनि आखिर मानिस नै हो जसमा मानवीय कमी कमजोरी हुन्छन्। स्रष्टाले पनि के बुझ्नु जरूरी छ भने सबै रचना सबैलाई मन पर्दैन। बाल्यकालमा लेखेका रचना बालकलाई मनपर्ला किशोरवस्थामा लेखिएका रचना किशोरकिशोरीलाई मनपर्ला। यसैगरी युवाकाल, वयस्क र बृद्धकालमा लेखिएका रचना सोही उमेरसमूह र विचार तथा अनुभव मिल्दाजुल्दा पाठकलाई बढी मन पर्दछन्।

त्यसकारण सर्जकले युवा वा वयस्क कालमा लेखेजस्तो रचना बृद्धावस्थामा भएन भनेर कलम रोक्नु राम्रो होइन। यसले प्रतिभाको हत्या र सिर्जनाको भ्रूणहत्या गर्दछ। अर्को कुरा सिर्जनालाई कलाको आवरणले मात्र ढाकेर तिहारको रंगीन

## मिठाई बिक्री गर्ने व्यापारी होइन सर्जक। साहित्य सिर्जनामा सुन्दर विचार, दृष्टिकोण र अनुभव चाहिन्छन्।

समाजले स्रष्टा जन्माउँछ जन्मेर उसले फेरि समाज बनाउँछ। स्रष्टाले आज अँध्यारो चिरेर देखाउँदा संसारमा अँधेरो मात्र पो छ कि भन्ने सम्प्रेषण पाठकमा पर्न नजाओस्। स्रष्टाले उज्यालोको स्वाद कस्तो हुन्छ भनेर पाठकलाई देखाउने बेला आएको छ यो पनि उसको दायित्व हो। महत्वपूर्ण कुरा आज हाम्रो समाजले सकारात्मक दृष्टिकोण र अभिव्यक्ति साहित्य क्षेत्रबाट पनि अपेक्षा गरेको छ।

# (१४) टेलिफोन र थुतुनो

वास्तवमा पढाइ विश्वविद्यालयमा टुङ्गिदैन। विश्वविद्यालयको पढाइ सकिएपछि नै वास्तविक पढाइ जीवनमा सुरु हुँदोरहेछ। त्रिभुवन विश्वविद्यालय चिकित्साशास्त्र अध्ययन संस्थानमा स्वास्थ्य शिक्षा पढाउने प्राध्यापक डाक्टर योगेन्द्रमान प्रधानाङ्ग स्वास्थ्य शिक्षा क्षेत्रका सुपरिचित हस्ती हुन्। उहाँका स्वास्थ्य शिक्षामा महत्वपूर्ण पुस्तकहरू प्रकाशन भएका छन्। ती पुस्तकहरू हाल विश्वविद्यालयहरूमा जनस्वास्थ्यका विद्यार्थीहरू स्वास्थ्य शिक्षाको पाठ्यसामग्रीको रूपमा पढ्ने गर्दछन्। तीसको दशकमा म पनि उहाँले एक विद्यार्थी थिएँ। मलाई पनि उहाँले स्वास्थ्य शिक्षा पढाउनु भएको थियो। उहाँले पढाएका कुरामध्ये अन्तरव्यक्ति संचार गर्ने क्रममा टेलिफोनमा कसरी कुरा गर्ने भनेर सिकाउनु भएको थियो। भौतिकशास्त्र, रसायनशास्त्र, गणित जस्ता विषयले दिमाग चाटिरहेको बेला त्यस्ता सामान्य कुरा सिकाउँदा यस्तो कुरा पनि के केटाकेटीलाई जस्तो सिकाएको होला भने जस्तो लाग्दथ्यो। यस्ता कुरा पनि पढाउनु पर्छ र? त्यत्तिकै जानिहालिन्छ नि जस्तो लाग्याथ्यो।

कहिलेकाहिँ एकाबिहानै घरमा फोन आउँछ। 'हेलो' फोन उठाउँछु। उताबाट काँचै खाउँला झैं गरेर कसैले सोध्छ 'को बोलेको?' दुईचार पटक त नाम बताएँ। पछि बोल्दै जाँदा त चिनेकै मान्छे त्यसरी सोध्छन् बा! आजकल किन किन मलाई पनि कहिलेकाहिं झोंक चल्न थालेको छ। मेरो घरमा कसैले फोन गर्दैछ। घरमा म छु मेरी श्रीमती र सानो छोरो छन् भन्ने पनि थाहा छ। फोन उठाउने पक्कै यी मध्ये कोही हुनसक्छ भन्ने कुराको सामान्य ज्ञान फोन गर्नेलाई छ। तैपनि पहिलो प्रश्न सोध्छ 'को बोलेको?'। उही मानिस भेटमा नरम स्वरमा बोल्छ तर फोनमा बोल्दा हप्काउँछ किन होला। त्यसैले मैले पनि आजकल उसको प्रश्नलाई प्रतिप्रश्न गर्छु 'तपाइले कसलाई खोज्नुभएको होला?'।

यतिबेला मलाई प्राध्यापक प्रधानाङ्गसरले सिकाएको पाठ झल्झल्ती याद आइरहेछ। वहाँ भन्ने गर्नु हुन्थ्यो टेलिफोनमा बातचीत गर्दा विनम्र स्वरमा बोल्नुपर्दछ। टेलिफोन उठाउँदा 'हेलो' भनेर आफ्नो नाम बोल्ने र 'यहाँलाई म के सेवा गर्नसक्छु' भनेर सोध्ने भनेर सिकाउनु भएको थियो। कसैलाई फोन गर्दा उता फोन उठेपछि आङ्खनो नाम सहित अभिवादन गरेर कोसँग कुरा गर्न खोजेको हो 'म उहाँसँग वातचित गर्न सक्छु कि!' भन्ने भनेर सिकाउनु भएको हिजै जस्तो लाग्छ। उहाँले लेखेका कितावमा पनि अझै त्यही कुरा लेखिएका छन्। तर म यथार्थमा विलकुलै भिन्न पाउँछु आफूलाई र अरुलाई पनि। कुनै कुनै गैरसरकारी संस्थामा अर्थात कुनै कुनै विदेशी संस्थामा त्यस्ता आदर्श कुराकानीका केही छनक पाउँछु तर व्यवहारमा कतै पनि यस्तो आदर्शमय भलाकुसारी मैले पाइन न त ममा नै त्यस्तो बानीव्यहोराको विकास भयो। जेहोस्, यत्ति चाहिँ हो कि फोन गर्दा मेरा गुरुले सिकाएको ज्ञानको याद चाहीँ आउँछ तर व्यवहारमा आइसकेको छैन। हुनसक्छ मभित्रको अभिमान र

पूर्वाग्रहले पनि त्यो हुन दिइराखेको छैन।

मोवाइल उठाउँछु उताबाट नानाथरी गफ गर्न थाल्छन्। फोन गर्दा फोन रिसिभ गर्ने मानिस कस्तो अवस्थामा होला भनेर फोन गर्नेले ख्याल गरेको उति पाइँदैन। फोन गर्नेले फुर्सद मिलाएर फोन गर्छ र सायद सोच्छ उता फोन उठाउने मानिस पनि आफूजस्तै फुर्सदमैं होला। फोन गर्ने मानिसले सोच्छ आफूजस्तो रोमाण्टिक मूडमा छु उठाउने मानिस पनि उस्तै मूडमा होला। अर्थात् फोन गर्ने मानिस आफू जस्तो दुःखित मूडमा छु उता फोन उठाउने पनि उस्तै दुःखित होला भन्ने सोच्ने गरिन्छ। यसरी परिचित साथीबीच पनि फोन गर्दा कहिलेकाहीँ समस्या र असमझदारी उत्पन्न हुनसक्छ।

आजकल फोन अत्यावश्यक सामग्री भइसकेको छ। पहिले जस्तो ठूल्ठूला मानिसलाई भेट्न जान घरघर धाइरहनु पर्दैन। आजकल मानिसहरू आङ्खनो घरमा आएर भेट गरुन् भन्ने आशा पनि त्यत्ति राख्दैनन्। किनभने सबै मानिस व्यस्त छन्। सबैलाई हतार छ। भेटघाटमा शिष्टाचारका कुराकानी गरेर समय खेर फाल्न मान्छे  त्यत्ति चाहँदैनन्। यो स्थितिको सिर्जना हुनमा टेलिफोनको सुविधा, कार्यव्यस्तता नै प्रमुख हुन्। आजभोलि चाकरी गर्नेलाई पनि भेटेर चाकरी गर्नुपर्दैन। फोनबाट पनि चाकरबाजको काम चल्छ। भेटघाट नगरिनहुने अवस्थामा मात्र मान्छे भेटघाट गर्दछन् आजकल। प्रायः सबैकाम आज टेलिफोन, इमेल, अनलाइनबाटै हुन्छन्। यसैले टेलिफोनमा वार्तालाप गर्ने कला एउटा महत्वपूर्ण कलाको रूपमा आफूले सिक्ने र बालबालिकालाई पनि सिकाउने बेला आइसकेको छ।

भनिन्छ मुखले मित्र र शत्रु दुवै कमाइन्छ। त्यसैले टेलिफोनमा कसरी राम्रोसित बातचित गर्ने भनेर सिक्नु र सिकाइनु पर्दछ। अर्को कुरा यसरी सिकाएर मात्र हुदैन सिकेको कुरा व्यवहारमा पनि उतार्न सक्नुपर्दछ। म पनि अझै प्रयत्न गर्दैछु। यसो सम्झन्छु यो टेलिफोन त साधन मात्र हैन हतियार नै पो रहेछ। जसको सही उपयोग गरियो भने शिकार मर्छ तर दुरूपयोग भयो भने आफै शिकार भइने रहेछ। ‘थुतुनो र मुतुनो जोगाउनु’ भनेर बूढापाकाले भनेको त्यसै होइनन्।

# (१५) पशुप्रति मानवीय संवेदनशीलता

महात्मा गांधीले भनेका थिए– 'कुनै देशको विकासको स्तर त्यस देशको पशुपंक्षीको स्थितिले पनि देखाउँछ।' मानिसको विकासको स्तर हेर्न त्यस क्षेत्रको पशुपंक्षीको जीवनस्तरलाई पनि गाँसेर हेर्नुपर्दछ। यसरी कुनै स्थानमा पशुपंक्षीलाई कस्तो व्यवहार गरिन्छ भन्ने कुरा त्यस स्थानको विकासस्तर मात्र नभएर मानवीय संवेदनशीलताको सूचकको रूपमा पनि लिइन्छ। यसैले गांधीले पशुपंक्षीको अधिकारको बारेमा सबैलाई सचेत गराएका थिए।

हाल विश्वमा गरिएका अध्ययनले पनि के देखाएको छ भने जुन क्षेत्रमा पशुपंक्षीप्रति बढी निर्दयता वा क्रुरता देखाइन्छ त्यस क्षेत्रमा हत्या र हिंसा पनि बढी हुने गरेका छन्। पशुपंक्षीलाई  पीडाबोध हुन्छ कि हुदैन भनि गरिएको वैज्ञानिक अध्ययनले पनि के देखाएको छ भने पशुपंक्षीमा पनि मानिसलाई झैं पीडाबोध गराउने स्नायुकोष हुन्छन्। जसले यिनीहरूमा पनि पीडाबोध गराउँछ केवल मान्छेमा झै अभिव्यक्त गर्ने भाषा वा संकेत मात्र फरक हुन्छ।

आखिर मारी खाने त हो के को माया र! भन्दै कुखुरा झुन्ड्याएर बोकेको यो दृश्य कुनै नौलो दृश्य होइन। राजमार्गमा खिचेको यो फोटो हाम्रै वरिपरिकै परिदृश्य हो। यस्ता दृश्य राजमार्ग होस् वा शहर बजार जतासुकै देख्न सकिन्छ। काठमाडौं जाने ट्रकमा हेर्ने हो भने राँगाहरू रक्ताम्मे उपत्यका पुऱ्याइन्छन्। कतिपय जीवजन्तु त किचिएर पिल्सिएर खान नपाएर बीचै बाटामा मर्ने गरेका छन्। हामी मानिसको सम्वेदनशीलताको छायाँ

# यी पशुपंक्षीमा कहिले पर्ने होला?

प्रस्तुत तस्वीरमा अथवा तस्वीर झैँ यत्रतत्र देखिने दृश्यहरू देख्दा यस्तो लाग्छ जसले यी पशुपंक्षी किन्छन् तब उसले सोच्दो हो मैले मासु बोकिरहेछु कुनै जीवित जीव होइन। मैंले उसको सजीवता निर्जीवता दुवै किनेको छु। उ बोल्न जान्दैन त्यसैले अत्याचार गर्ने हक पनि पैसाले नै छिनेको छु। सायद यस्तै सोचेर हामी किन्न बेच्न लगिएका पशुपंक्षीलाई झण्डै झण्डै निर्जीव वस्तुलाई झैं व्यवहार गर्ने गर्दछौं।

सडकमा बयलगाडा गुड्छन्। काँधमा जुवाको बनाएको चोट लागेको हुन्छ घाऊबाट रगत बगिरहेकै हुन्छ। तापनि निको हुनै नपाई निरन्तर भारी बोकिरहनु पर्ने नियति राँगाको छ गोरुको छ गधाको छ। केवल घाँस खुवाए पछि वा केवल रुपैयामा खरिद गरेपछि मानिस वा मालिकलाई जेसुकै गर्ने हक हाँसिल भएको छ भनेर कतिपय मालिक सोच्ने गर्छन्। जुन संवेदनहीनता हो। अर्थात क्रूरताको नमूना हो।

पशुपंक्षीमाथि हुने यस्तै अत्याचारका विरुद्ध आज विश्वमा पशु अधिकारवादी जन्मेका छन्। हाम्रै छिमेकी मुलुक भारतमा पनि पशु अधिकारका लागि धेरै प्रयास भएका छन्। यस अभियानमा मेनका गांधीको नाम पनि अग्रपङ्तिमा आउँछ। पशु हकहितमा लाग्नेलाई राम्ररी थाहा छ उनीहरूको प्रयास स्वरूप कुनै पनि पशुले कुनै दिन उसलाई पुरस्कार वा धन्यवाद दिने छैन। तर पनि उनीहरू यस अभियानमा निरन्तर लागेकै छन्। वास्तवमा यो अभियान मानव संवेदनशीलताको सुन्दर नमूना हो।

पशु चिकित्सकहरू पनि यस सवालमा निकै संवेदनशील हुँदारहेछन्। केही महिना अघि जिल्ला विकास समिति झापाको एउटा प्राविधिक बैठकमा बर्ड–फ्लू रोगको रोकथाम सम्बन्धि कार्य–योजना बन्दै थियो। जसमा झापाका कुखुरापालक कृषक तथा मासु व्यवसायीको पनि सहभागिता थियो। उक्त बैठकमा पशु चिकित्सकले पशुपंक्षी माथि गरिने अत्याचारबारे चर्चा गर्दै यसले हामीले खाने मासुमा पर्ने प्रभावका बारेमा सबैलाई सचेत गराए।

फोटोमा देखाए जस्तै गरेर बोकेका पशुपंक्षीमा अर्थात सास्तीपूर्वक ढुवानी गरिएका पशुपंक्षीहरूका शरीरमा एड्रिनलिन भन्ने एक प्रकारको हर्मोनको उत्पादन हुन्छ। जुन हर्मोन मानिसमा पनि डराएको बेला शरीरमा उत्पन्न हुनेगर्दछ। यसले मुटुको चाल र रक्तप्रवाह बढाउने गर्दछ। एड्रिनलिन हर्मोन यसरी अत्यधिक रूपमा उत्पन्न भएको मासुको गुणस्तर घट्नुका साथै यस्ता मासुको सेवनले मानिसको स्वास्थ्यमा पनि प्रतिकूल प्रभाव पार्दछ भनेर पशुचिकित्सकहरूले सल्लाह दिएका छन्।

हामीले मासु खाने जीवजन्तुलाई कमसेकम नमारुञ्जेल संवेदनशील भई व्यवहार गरौं। पशुअधिकारको रक्षा गरौं र आत्माको सम्मान गरौं।

# (१६) पुस्तकालय

पुस्तकालय सभ्य मानिसको साधनास्थल हो। कुनै कुराको महत्वमा समयसापेक्ष कमबेसी हुनसक्छ तर सभ्य मानिसले निर्माण गरेको पुस्तकालयको महत्वमा कहिल्यै कमी आएको छैन र आउँदैन पनि बरु यसको महत्व र उपयोग दिनदिनै बढ्दो छ। झापा जिल्लाको एउटा पुस्तकालयमा पस्ने अवसर पाएँ– चन्द्रगढीको एउटा पुस्तकालय – लेखनाथ पुस्तकालयमा। २०६४ साल जेठ ५ गते पुस्तकालयको आयोजनामा चन्द्रगढी झापामा लेखनाथ पौडेलको वार्षिक जन्मजयन्ती मनाइयो। यस अवसरमा पुस्तकालयको स्मारिका लोकार्पण गर्‍यो। मेची क्याम्पसका प्राध्यापक, साहित्यकार तथा अन्य विद्वानहरूले प्रकाशित स्मारिकाको समीक्षा गरे। नेपाली भाषाका झर्रोवादी आन्दोलनकर्ता चुडामणि रेग्मी, कृष्ण धराबासीलगायतले कार्यक्रममा मन्तव्य राखे।

साहित्यकार तेजराज खतिवडाले झापामा पुस्तकालयको इतिहास कोट्याए। उनका अनुसार झापामा दुईवोटा पुस्तकालय निकै पुराना रहेछन्। ती हुन् वि.स. २००७ सालमा भद्रपुरमा स्थापित पुस्तकालय र वि.स. २०११ सालमा स्थापित गौरीगञ्जको पुस्तकालय। झापा चन्द्रगढीस्थित लेखनाथ

पुस्तकालयको स्थापना वि.स. २०३७ सालमा भएको रहेछ। अढाइ दशकअघि भवानी धिमिरेको अगुवाईमा चूडामणि रेग्मी, डिल्लीप्रसाद भट्टराई, प्रमेश न्यौपाने, घनश्याम लम्साल, मोहन न्यौपाने, वासुदेव राजवंशी, बुद्धिमान प्रधान, चन्द्रमान प्रधान, पुष्प पोखरेल र कृष्णराज तुलाधरको समेतको सक्रियतामा बाचनालय तथा पुस्तकायको रूपमा स्थापना भएको रहेछ। यसका वर्तमान पदाधिकारीमा अध्यक्ष कृष्ण सुवेदी "निराकार" र सचिवमा देवीचरण भण्डारी "सरोज" र कोषाध्यक्षमा लक्ष्मी पौडेल छन्। साथै सल्लाहकारमा चूडामणि रेग्मी, डा ऋषिकेश उपाध्याय, डा द्रोणकुमार उपाध्याय लगायतका रहेका छन्। झापाको सदरमुकाममा रहेको यो संस्था नेपाली साहित्य गतिविधिमा निकै सक्रिय रहेछ। नियमित मासिक कवि गोष्ठी, साहित्यकार भेटघाट, त्रैमासिक तथा वार्षिक प्रकाशन तथा सम्मान कार्यक्रम पनि यो संस्थाले नियमित रूपमा गर्दै आएको छ।

लेखनाथ पुस्तकालयले प्रकाशित गरेको यसपालिको स्मारिका बारेमा लोकार्पण भएकै दिनमा निकै चर्चा–परिचर्चा भए। पुस्तकमा लेखनाथसम्बन्धी उपयोगी लेखहरू तथा समसामयिक कविता, गजल, कथा तथा अन्तरवार्ता सँग्रहित छन्। यसमा नारी हस्ताक्षरको कमी देखियो भन्ने कुरा वक्ताहरूले उठाए। अर्कातिर प्रस्तुत पुस्तकमा मात्र नारी हस्ताक्षर कम भएको हैन कि वास्तवमा लेख्ने महिलाको संख्या पनि कम छ भन्ने कुरा पनि कार्यक्रममा बोल्ने अन्य वक्ताले उठाए। उता सम्पादक मण्डलले के स्पष्टीकरण दियो भने– महिला हस्ताक्षरलाई पनि समान रूपमा रचना माग गरिएको थियो तर महिला स्रष्टाहरूबाट मागबमोजिम रचना प्राप्त भएन।

उक्त कार्यक्रममा कृष्ण धरावासीले केही महत्वपूर्ण सवालहरू उठाए। उनले उठाएको पहिलो कुरा हो साहित्यकारहरूको सालिकमाथिको आक्रमण। नेपाली साहित्यमा लीलालेखनाई सशक्त ढंगले अघि बढाउने साहित्यकारले साहित्यकारकै सालिक तोडफोड विरुद्ध आवाज उठाउँदा उपस्थित सहभागी साहित्यकारहरू गम्भीर देखिन्थे। यस्तै उनले उठाएको दोश्रो विषय थियो– साहित्यिक कृति उपहार पाएपछिमात्र पढ्ने बानी। पुस्तक सित्तैमा पाएर हैन किनेर पढ्नु पर्छ भन्ने उनको मान्यता थियो। उनले उनका १२ वोटा पुस्तक बाडेरै सकेछन् र भन्छन् "मैले १२।१२ वोटा किताब बाँडेर सकें अब कति बाँड्नु? पछिल्ला २ ओटा पुस्तक मैले बाँडिन।" प्रस्तुत भनाइले हाल नेपाली साहित्यमा स्रष्टाका अवस्था र सर्जकका कठिनाई एवम् पाठकको बानीबारे प्रकाश पारेको छ। उनको आग्रहले स्रष्टा र पाठक दुवैलाई केही सन्देश दिएको छ।

एउटा पुस्तकालय भनेपछि प्रायः हामी भौतिक रूपमा देखिने भवन, टेबल, कुर्सी, पुस्तक, पत्रपत्रिका तथा पाठक सम्झन्छौं। केवल वाचनालयको रूपमा मात्र नरहेर त्यो भन्दा पनि गहकिला काम पुस्तकालयले गर्दोरहेछ। देशको ज्वलन्त सवाललाई लिएर विद्वान वर्गको भेला गराउन होस् वा चिन्तन गराउन होस वा समसामयिक विषयमा स्रष्टाका दृष्टिकोण उजागर गर्न होस् यस्ता पुस्तकालय प्रभावकारी थलो हुँदोरहेछ। युग हाँक्ने पथप्रदर्शकको भूमिका पनि खेल्दोरहेछ पुस्तकालयले। झापाको बसाइमा पुस्तकालयको योगदान देखेर म उत्साहित छु। पुस्तकालयका यस्ता उदाहरणीय सत्प्रयासको खाँचो देशलाई हिजो परेको थियो, आज परेको छ र भोलि पनि पर्नेछ।

# (१७) बैंकक शहरमा कोइलीका श्वर

एकहप्ते पाहुनाको रूपमा बैंककले हामीलाई स्वागत गरिरहेको थियो। मातृशिशु मृत्युदर कम कसरी गर्न सकिन्छ विषयमा विश्वमा भएका प्रयासहरूको विश्लेषण तथा सेमिनार मिलेनियम हिल्टन होटलमा भइरहेका छ। हामी नेपाली ५ जनाको टोलीलाई भने उक्त होटलमा नअँटेर नजिकैको अर्को पाँच तारे अर्किड सेराटन होटलमा राखिएको छ। दुई होटलको बीचमा चाओफ्राया नदी पर्दछ। ओहोरदोहोर गर्नलाई होटलले नै १०-१० मिनेटको फरकमा चल्ने डुङ्गाको ब्यवस्था मिलाइदिएको रहेछ।

एक बिहान हामी नदी पारी हिल्टन होटेल जान डुङ्गा पर्खिरहेका थियौं। एकजना बिरामी बृद्धलाई दुईजना मानिसले डोऱ्याउदै हामी उभेको स्टेशनतर्फ ल्याए। मैले आफ्नै देशका यस्तै विरामीहरू सम्झें मनमनै तुलना गरें। आहा यहाँ त कति सुविधा कति सम्पन्नता स्वास्थ्य संस्था जान होस वा कतै ओहोरदोहोर गर्न डुङ्गा थप सुविधा पनि छ। एकैछिनमा पर नदीमा तैरदै एउटा सानो डुङ्गा स्टेशनमा आएर रोकियो। बडो कष्टपूर्वक विरामी डुङ्गातिर अगाडि बढ्ने प्रयास गर्दै थिएँ। निकै प्रयासका बाबजुत पनि डुङ्गामा पाइला टेक्न भने बिरामीले सकिरहेका थिएनन्। हामी एकप्रकारले मुटु थामेर त्यो परिदृश्य चियाउदै थियौं। अलि पर अर्को अलि ठूलो पानीजहाज आएपछि नदीमा निकै ठूलो छाल आयो। र उक्त सानो डुङ्गालाई असन्तुलित बनाइदियो।

त्यहाँ त्यसै पनि अप्ठेरो भइरहेका विरामी बृद्धलाई डुङ्गा चढ्न झनै असम्भव भइरहेको थियो। बिरामीका सहयोगी दुईजना त्यसमा पनि एक जना महिला र अर्का पुरुषले बिरामीलाई उचालेर हाल्न निकै प्रयास गरे तर सकेनन्। यसैबीच उर्लेको छाल सँगसँगै सहयोग याचिका जस्तो गुहारेको चिच्याहट एक्कासि आयो। म अनायास त्यसतर्फ दौडिए र बिरामीको

एकपाटालाई काँध थापें। मेरो पछिपछि भानु येङदेनजी पनि आए, उनले अर्को पाटो समाइदिए। अब उनीहरू दुईजना डुङ्गा चढे र बिरामीको दुवै खुट्टा अँठ्याए र डुङ्गाभित्र ताने हामीले बिरामीको जीउ थामिदियौं र बोकेर डुङ्गाभित्र हालिदियौं। यसपछि ती दुईजना थाईले हामीलाई आभार व्यक्त गरे। उनीहरूकै परम्परागत धनुष्टङ्कार नमस्कार दुईदुई पटक हैन तीन तीन पटक गरे। हामीप्रति उनीहरूको आदर र आभारका लहर नदीमा एक्कासि अघि आएको छाल जत्तिकै उर्लेको थियो। खुशी र लाज दुवै लाग्यो। हात हल्लाएर डुङ्गालाई विदा गर्‍यौं। यत्तिकैमा हामीलाई लिन अर्को डुङ्गा छेवैमा आइपुगेको थियो।

अर्कोदिन किनमेल गर्न बैंककको शियाम भन्ने स्थानमा गयौं। आकाशे पुलको एउटा खम्बामा एउटा अन्धो बूढो एक हातले कि–बोर्ड बजाउँदै अर्को हातमा खाली कपमा भिख थाप्दै गरेको दृश्यमा गएर म ठोक्किए। छेवैमा गएर अडिएँ र सुनें उसको सँगीत। एकछिन उसको नजिक उभिएर पढें उसलाई सरसर्ती। भित्तामा अडेस लागेर ऊ ईश्वरसित कुरा गरिरहेको जस्तो लाग्यो मलाई त। उसको छेवैबाट ओहोरदोहोर गर्ने यात्रुमा खल्तीबाट खस्ने आनासुकी अर्थात भाटको आवाज र स्पन्दनले बाच्ने अवसर थपिदै थियो।

अलिपर एउटी अर्की अन्धी महिला रेकर्ड गरिएको सँगीतमा माइक्रोफोनमा एकसुरमा गीत गाउँदै थिई। उसको एकहातले माइक्रोफोन र अर्को हातले मग बोकेर सडकमा यताउता गरिरहेकी छे। कुनै टेलिभिजनमा गाउने, नाच्ने कुनै तारा वा आईडलको लागि गरिएको प्रतियोगिताको प्रस्तुति भन्दा विल्कुलै भिन्न छ यो सँगीत र आवाज। किनभने कुनै प्रतियोगिता जित्न खोजिएको आवाज होइनन् यी स्वरहरू। जहाँ बाँच्ने चाहना छ मायाको प्यास छ सायद यसैले यो सँगीतमा अन्तरआत्माको गहिराइ सम्म छुने शक्ति छ।

अर्को दिन चाटुचाङ बजार घुम्दा एउटा तीतो अनुभव पनि भोगियो। बजारमा किनमेल गरेर दुई हातमा प्लाष्टिकको ब्याग झुन्ड्याएर हिड्दै थिए। काँधमा सानो झोला भिरेको छु। त्यही

ब्यागमा पैसालगायत हवाइजहाजको टिकट र पासपोर्ट बोकेको छु। बाटोमा हिड्दा पछाडिबाट भीडमा कसैले मेरो शरीरमा अनि कहिले झोलामा बेलाबेला छोएको तानेको जस्तो हल्का महसुस गर्दै थिएँ तैपनि पकेटमाराले पछ्याउँदै होला भन्ने शंका मनमा थिएन। एक ठाउँमा निकै बलपूर्वक मेरो झोला तानेको महसुस गरें। यसो झोला हेरें– बोकेको झोलाको चेन आधा खुलेको छ। मैले हत्तपत्त पूरा चेन खोलेर झोला हेरें पासपोर्ट र पैसा रहेछ, लान पाएनछ। पछाडि फर्केर म पछि पछ्याउने मानिसलाई अनुहारमा हेरें निलोकालो भयो र त्यो पकेटमारा छिनैमा छड्कियो।

जेहोस् मलाई बैंकककको सबैभन्दा आनन्द लागेको कुरा हो कोइलीको आवाज। होटलभित्रै कोठामा बिहान ५ बजेदेखि कोइलीको आवाज र चराको चिरबिर सुनिन्थ्यो। यसबेला मलाई आनन्द र अचम्म दुवै लाग्यो। यत्रो शहर छ यत्रा घरहरू छन् तैपनि हरित वातावारण दुरुस्त छ। शहर सफा छ। शान्त छ। गाडीको अनावश्यक हर्न छैन। मैले गाडीको हर्न बजेकै त्यत्ति सुनिन। वास्तवमा बैंककले मलाई धेरै कुरा सिकायो।

# (१८) भोगाइको अनुभूति र प्राप्ति

मान्छेले मान्छेलाई आफ्नै मापकले नाप्न र जोख्न खोज्दछ। यो कार्य उत्तरआधुनिककालमा प्रायः असम्भव नै छ। हिजोका आँखाले आज र आजका आँखाले भोलि हेर्ने हाम्रो बानी छ। जीवन र जगतमा सेता र काला बाहेक अरू रङ्गहरू पनि छन्। सात रङ्गबाटै अन्य रङ्ग पनि जन्माउन सकिन्छ भन्ने संभावना बोक्ने उत्तरआधुनिक चेतनाको स्वर हो।

मलाई आजभन्दा पाँच वर्ष अघि जुनबेला म जनस्वास्थ्य क्षेत्रमा अध्ययन अनुसंधानमा व्यस्त थिएँ त्यसबेला मेरा सहकर्मी, स्वास्थ्यकर्मी, विकासकर्मीहरूले मलाई भन्दथे– “तपाईले त यस्तै अध्ययन अनुसन्धान गर्ने कन्सलटेन्सी खोल्नुपर्ने! अनुसन्धान क्षेत्र तपाईलाई सुहाउने क्षेत्र हो”। यसैगरी आजभन्दा करिब सातवर्ष अघि म स्वास्थ्यकर्मी लगायत अरु क्षेत्रका सामाजिक कार्यकर्तालाई समय समयमा जनस्वास्थ्य विषयमा तालिम दिने गर्दथें। त्यसबेला मलाई कसै कसैले एकान्त पारेर सल्लाह दिन्थे– “तपाई त कुनै शिक्षण संस्थामा प्रशिक्षक वा अध्यापक बन्नुपर्ने मान्छे जनस्वास्थ्यकर्मी बन्नुभो, ...”

यसै क्रममा आजभन्दा तीन वर्ष जति अघि जब मैले पत्रपत्रिकामा जनस्वास्थ्यसम्बन्धी लेखरचना लेख्न तथा प्रकाशन

गर्न थालें तब मलाई मोरङ पत्रकार महासंघका सभापति शिवबहादुर कार्कीले पटकपटक भन्नुभो "तपाई त पत्रकार नै हो नी हाम्रो साथी"। विराटनगर कोशी एफ.एम. तथा 'उद्घोष' दैनिकका समाचार सम्पादक विक्रम निरौलाले त अझ के सम्म भने भने– "तपाईले पठाएका विज्ञप्ति तथा समाचार त हामीले सम्पादन त्यत्ति गर्नैपर्दैन, तालिमै नलिए पनि तपाईको लेखाई पत्रकारको जस्तो छ"।

करिब तीन दशक अवधिमा रचिएका कविताहरूका सँगालो "जीवन मेरो शव्दकोश" कवितासँग्रहलाई एक वर्ष अघि पहिलो साहित्यिक कृतिका रूपमा लोकार्पण गरें। उक्त कृति हेरेपछि वरिष्ठ आख्यानकार परशु प्रधानले मलाई एकदिन भन्नुभो– "तपाईलाई त जागिरले पो खाएको रहेछ यतिञ्जेल, तपाईलाई नेपाली साहित्यमा बल्ल चिन्यौं अब लेखनकार्य तथा सहकार्य नटुटोस्" भनेर स्वागत र शुभकामना दुवै दिनुभयो"। यसरी उहाँहरू सबैले आफ्नै क्षेत्रमा मलाई पाउनुभो वा देख्ने चाहना राख्नुभो।

तीन वर्षअघि म जिल्ला जनस्वास्थ्य कार्यालय मोरङमा खटिएर जाँदा एक जना पत्रकारले मसित अन्तर्वार्ता लिने क्रममा सोधे– "तपाई त लाहुर जानुपर्ने मान्छे कसरी सरकारी अधिकृत बन्नुभो हँ?"। धेरैका जिज्ञासाको प्रतिनिधित्व गर्ने यो प्रश्न वास्तवमा स्वभाविक पनि थियो। तत्काल पत्रकारले सोधेका उक्त प्रश्नलाई मैले त्यसरी नै लिएँ र जवाफ दिएँ। अझै पनि म कुनै पसलमा किनमेल गर्न पसें भने सायद मेरो शारीरिक बनोटको आधारमा मलाई लाहुरेकै रूपमा लिन्छन्। कसैले त सोध्छन् तपाई लाहुरे हो भनेर। कसैले नसोधिकनै सोहीअनुरूपको व्यवहार गर्छन् मसित। मलाई किनमेलका

सामानको भाऊ लाहुरेलाई झै बढाउँछन्। दलाली गरेर किन्ने ठाउँमा म यसरी नै प्रायः ठगिन्छु पनि। यसरी मलाई हेर्नेहरूको दृष्टिकोण र आशा आ–आफ्नै ढङ्गको र विविधतायुक्त छ।

यतिबेला म स्थिति अलि फरक अनुभव गर्दैछु। आजकल मलाई हेर्ने कतिपयको दृष्टिकोण र छाम्ने हात अलि बद्लिएको पाउन थालेको छु। हिजो मलाई साहित्यकार भन्नेहरू मलाई आज अलि पत्रकार बढी भएको र हिजो मलाई पत्रकार ठान्नेहरू आज अलि साहित्यकार बनेको ठान्ने गर्दछन्। हिजो मलाई अन्वेषक बन्नुपर्ने भनि आशा राख्नेहरू आज मलाई लेखकको रूपमा र हिजो प्रशिक्षक बन्नुपर्ने भनि आशा गर्नेहरू आज मलाई शोधमा चाख राख्ने व्यक्तिको रूपमा हेर्ने गर्दछन्। यो उनीहरूको दृष्टिभ्रम हो भनेर ठोकुवा गर्न त म सक्दिन। तर यो नै पूर्ण सत्य वा पूर्ण असत्य पनि होइन।

आखिर  म के हुँ त? यो प्रश्न मेरो छोरोलाई सोध्यो भने सजिलै जवाफ दिनेछ 'बुबा' भनेर। किनभने म उसको केवल बाबु हुँ। मेरा स्वास्थ्यकर्मीका लागि म केवल सहकर्मी हुँ। उनीहरूमध्ये धेरैलाई म कविता लेख्छु भन्ने थाहा पनि छैन। यसो कवि गोष्ठीमा छिर्‍यो भने कवि भनेर बोलाउँछन्। स्वास्थ्य क्षेत्रमा गयो भने स्वास्थ्यकर्मी भनेर चिनिन्छु। अझ कतैकतै त भू.पू. गायक भनेर गीत गाउन पनि लगाउँछन्। यी सबै भोगाइलाई आनन्द वा पीडा दुवै मान्न सकिन्छ। तर म यसमा बडो आनन्द पाइरहेछु। एकप्रकारले सम्झँदा बाल्यकालमा "कु–कु!" खेलेको जस्तै आनन्द। लुक्दा एकछिन् कसैले नदेखोस् जस्तो पनि लाग्ने, अनि साँच्चै नदेखेमा 'हा–हा' गर्दै आवाज निकाल्दै साथीसामू प्रकट हुँदै हाँस्ने र हँसाउने खेल खेले जस्तो।

जे होस्, मेरो यो भोगाइको अनुभूति मेरो प्राप्ति हो सम्पत्ति र विशेषता पनि। यसो सम्झन्छु वास्तवमा मलाई सम्बोधन गरिने सबै नामको लायक म छैन। यसैले यस्ता संज्ञा वा विशेषणले बोलाइदिंदा वास्तवमा भित्रैदेखि मलाई लाज लागेर आउँछ। कुनै मापकमा कतै ठ्याक्क नमिल्ने मान्छेलाई के नाम दिइन्छ? मलाई थाहा छैन। अंग्रेजीमा एउटा कहावत छ– "ज्याक फर अल

मास्टर अफ नन्"। ट्याक्क टुक्क सबै जान्न खोज्ने तर कुनै विषय पनि फेदैसम्म नबुझेको वा नछिचोलेको मान्छेलाई के भनिन्छ**?** यस्ताको नाम मैले शव्दकोश पनि खोजें तर अझै भेटेको छैन।

कत्ति गनथन गर्नु**,** अहिलेलाई यसमा मेरै नाम राखेर काम चलाइ दिउँ। र अहिले छुट्टिने बेलामा हेरौं मेरो "गधा मञ्जुर" शीर्षकको एउटा छोटो कविता।

तिमीले मलाई उसको भन्यौ
ऊ मलाई तिम्रो भन्छ
सबैको हुँ भन्दथें म
आखिर
कसैको भइन।

ठिक छ
म
गधा बन्न राजी भएँ
मलाई घर चाहिएन
भैगो चाहिएन घाट पनि
केवल भारी भए पुग्छ
हिंडिरहने म एउटा गधा
हिंड्ने बाटो भए पुग्छ
मलाई घर र घाटबीचको
बस् एउटा बाटो भए पुग्छ
केवल हिंड्ने बाटो भए पुग्छ।

# (१९) स्मृतिका छालहरूमा प्रधानबा

बोटभरि ढपक्क हलुवावेत कतै पाकेको देख्दा मलाई प्रधानबाको मीठो याद आउने गर्दछ। तेह्रथूम मोराहाङमा लामो कार्यकालसम्म प्रधानपञ्च भएका दुर्गबहादुर खापुङलाई गाउँमा 'भूतपूर्व प्रधानपञ्च' भन्नु भन्दा पनि 'प्रधान' अर्थात् 'पर्धान' अर्थात 'प्रधानबा' भनेर सम्बोधन गरिन्थ्यो। बा उमेरका उनलाई म पनि 'प्रधानबा' भनेर सम्बोधन गर्दथें।

त्यस्तै साठीसत्तरी वर्षीय अग्ला जीउडाल भएका प्रधानबा गफ–सफ गर्न होस् वा ख्याल–ठट्ठा गर्न होस् सारै नै रमाइला र मिजासिला थिए। के केटाकेटी, के बुढाबुढी, के ठिटाठिटी के तरुनीतन्देरी सबैलाई गफ गरेर होस् अथवा जिस्क्याएर, हौस्साएर होस् मख्खै पार्दथे। उनको त्यो कला देखेर म दङ्गै पर्दथें। साँच्चै भन्ने हो भने त्यस्तो फरासिलो मान्छे अझसम्म मैले भेटेकै छैन। उनको त्यस्तो कला सम्झेर म अझै पनि त्यो सिक्न कोशिस गर्दैछु।

मोराहाङको हाटकोबीचैमा एउटा लामो चौतारा र फराकिलो डाँडा छ, जहाँ प्रधानबा उनकै उमेरका भलाद्मीहरूसित बसेर प्रायः दिनभर गफ गरेर बिताउँथे। बेलाबेलामा उनको हाँसोसित अरूको हाँसो थपिएर उर्लदा मोराहाङको त्यो डाँडा नै एकप्रकारले उचालिन्थ्यो, तिहारमा जुवा खेल्दा जुवाडे चिच्याए

झैं, घरभित्र बसेका पनि झ्यालढोकाबाट चियाउँथें। यो देखेर यात्रुहरू एकछिन रोक्किएर उनीहरूतिर फर्केर हेर्दथे अनि मात्र बाटो लाग्थे। मलाई उनको त्यो उपस्थितिले गाउँनै उज्यालो र रमाइलो लाग्दथ्यो।

यही मोराहाङ गाउँमा रहेको स्वास्थ्यचौकीमा इञ्चार्जको रूपमा सरुवा भएर म गएको छु। बि.स. २०४५ सालतिरको कुरो हो। प्रधानबासंग मेरो परिचय पनि अनौंठो तरिकाले नै भयो। मैले उनलाई यसअघि देखेको थिइन तर नाम चाहीँ सुनेको थिएँ। 'भूतपूर्व प्रधानपञ्च' वहाँ नै हो भन्ने मलाई थाहा थिएन। बिरामी हेर्ने काम सकिएको थियो क्यार, म स्वास्थ्यचौकीको भवन अघि डिलमा उभिएको थिएँ। स्वास्थ्यचौकी भवन छेउ चउरमा एकजना सेतो कुर्तासुरुवाल लगाएको भलाद्मी मानिस गोरु चराइरहेछ। उनले मतिर घरीघरी हेरे जस्तो लाग्यो। र उनले नै पहिले मुख फोरेर आफ्नो परिचय दिए। त्यसपछि उनी फुर्सदमा स्वास्थ्यचौकी आएर दिनभर गफ गर्ने क्रम सुरु भयो। हप्तामा एकदुई दिन उनी स्वास्थ्यचौकी आउँथे अनि आफ्नो रक्तचाप मापन गरेर फर्कन्थे। पछि थाहा भयो उनी रक्तचापका बिरामी रहेछन्।

एकचोटि वर्षाको समयमा उनी थला परे रक्तचापले। मैले उनको उपचार गरें। उनको रक्तचाप नियन्त्रण भयो। मैले उनलाई विराटनगर वा धरानमा गएर राम्ररी उपचार गराउने सल्लाह दिएँ। वि.स.२०४७ सालतिर होला उनी हिउँदमा धरान झरे अनि उपचार गरेर थुप्रै औषधी लिएर घर फर्किए। करिव एक वर्ष पनि नपुग्दै उनी पुनः नराम्ररी थला परे। यसबेला उनले निकै हरेश खाएका रहेछन्। उपचार गरें जाती भयो। पछि थाहा भयो, उनले सारै नै गुन मानेछन् मसँग। पटक पटक उनी भन्दथे– "डाक्टरसाब,

यसपालि त मैले बाँच्छु होला भन्ने आशा मारिसकेको थिएँ गाठे! बाँचे पो त हौ! धत्तेरी, तपाई नभएको भए त म..” भनेर मलाई धाप मार्दथे।

प्रधानबाको घरमा हलुवावेत र सुन्तलाका बोटहरू थिए। उनको घरमा जाँदा मंसीर पुसतिर सुन्तलाको ढाकी अघि सारेर मलाई स्वागत गर्दथे। स्वास्थ्यचौकीमा उनी आउँदा मेरो छोरा ‘कौशललाई है यो’ भन्दै झोलामा सुन्तला ल्याइदिन्थे। बेलाबेला उनी मलाई भन्दथे– “म डाक्टरसाबलाई एकदिन मेरै हातले हलुवावेत खुवाउँछु है, नाइ भन्न पाइदैन नी!”। मैले पनि “ठिकै छ नी खाउँला नी बा!” भन्दिएँ।

नभन्दै एक शनिवारको दिन एउटा निकै ठूलो फुर्लुङमा करिब ५०-६० वोटा जति हलुवावेत लिएर प्रधानबा म बसेको क्वार्टर तर्फ आए– “खै हँ डाक्टरसाब” भन्दै। मलाई “लौ आउनोस् घाममा बसौं” भनेर अलिपर चउरमा आउन भन्नुभो। मेरी पत्नी चञ्चलालाई पनि “लौ नानी! तपाई पनि आउनोस्, एकदुईवोटा थाल पनि ल्याउनोस है!” भन्दै बोलाउनु भयो।

अरूले छोडाएको अण्डा, सुन्तला तथा केरा खान दिगमिग लाग्ने मलाई, उनको त्यो हातले छोडाएको हलुवावेत खान साह्रै सकस पर्‍यो मलाई। गुन्द्रीमा संगै बसेका छौं। उनी धमाधम हलुवावेत छोडाउँदै मलाई खुवाउनको लागि मेरो थालमा राख्दैछन्। उनको त्यो लामो र कालो नङ म घरिघरि पुलुक्कपुलुक्क हेरिटोपल्छु। ती पहेंला हलुवावेतलाई उनी बडो उत्साहका साथ छोडाएको देखेर म उनलाई रोकेर म आफै छोडाएर खान्छु भनेर वलपूर्वक भन्न पनि सक्दिन। उनले दिल खोलेर जसरी खुवाउँदै छन् उसरी न म आँत खोलेर खान नै सक्या’छु। बीचबीचमा म आफै छोडाएर खान यसो लम्कन्छु तर

वहाँ मलाई पटकपटक रोक्नुहुन्छ।

वास्तवमा, त्यसबेला मलाई राम्ररी बोल्न पनि दिएनन् प्रधानबाले। मेरो सुनवाई नगरी एकतमास फत्फताउँदै प्रधानबाले छोडाइहे हलुवावेत, मानौ कुनै बालकलाई खुवाउन छोडाइरहेछन्। त्यो नङ र हात देखेर खाउँ कि नखाउँ भएको छु। एकातिर त्यो दिगमिग अर्कातिर बाको त्यत्रो माया र श्रद्धा छ हलुवावेतमा। बडो सरममा परें म!

यसरी म यता घोत्लिदा घोत्लिदै, उता प्रधानबाले त ९-१० दाना हलुवावेत पो छोडाइसक्नु भएछ मेरै थालमा। एउटा खाएँ अर्को खाएँ मीठो पनि छ तर घिन पनि लाग्छ। लाज पनि लाग्छ, भो खान्न पनि भन्न सक्दिन। मलाई बोल्नै नदिई केवल “लौ खानुहोस् कस्तो लाग्यो?” भनेर मात्र सोध्नु हुन्छ, म चाहीँ “मीठो लाग्यो” भन्दै बिस्तारै खाँदैछु। “भैगो बा म आफै हलुवावेत छोडाएर खान्छु नी!” भनेर निकैपटक भनें। तर वहाँ मलाई “कहाँ हुन्छ म आफ्नै हातले नै खुवाउँछु मीठो छ खानुपर्छ” भन्दै खुवाउनु भयो।

यस्तै ३-४ वोटा जति खाएपछि मेरो छोरा कौशल र पत्नी चञ्चला पनि छेउमा आइपुगे। अब भने बल्ल मेरो सास आयो। हलुवावेतको मेरो थाल उता सारिदिएँ “लौ तिमीहरू पनि खान बस!” भन्दै।

उसबेला मैले हलुवावेत त खाएँ तर कसरी खाएँ आज सम्झदा बडो मजा लागेर आउँछ, प्रधानबाको हँसिलो मुहार म अघि आउँछ घरीघरी।

अब त मैले त्यसबेला मलाई लागेको दिगमिग लगभग बिर्सिसकें। तर त्यो हलुवावेत छोडाउँदा प्रधानबाको मुहारमा मप्रति उत्पन्न भएको प्रेम र श्रद्धाको चमक भने झल्झल्ती

आइरहन्छ। उनका नङ देखेर उसबेला म डराएथें अब म त्यसलाई नै प्रेम गर्न थालेको छु। मेरो खातिर त्यसरी स्वःस्फूर्त रूपमा चलेका उनका फूर्तिला हातहरूलाई म आज श्रद्धा गरिरहेको छु।

आज म कल्पन्छु, के यसरी नै कसैले फेरी हलुवावेत अब मलाई खुवाउन तत्परता देखाउला त! अहँ, यस्तो क्षण मेरो लागि जीवनमा केवल एकपटक आएको रहेछ।

आज प्रधानबा यो दुनियाँबाट विदा भइसक्नुभएको छ। उनको घरको हलुवावेतको बोट सायद अझै त्यहीँ होला नहोला। तर ती हात, ती छोडाएका हलुवावेत, त्यो प्रेम र श्रद्धा मेरो मानसपटलमा सदा रहनेछन्। आज प्रधानबालाई सम्झदा मात्र पनि म गद्‌गद् हुन्छु। त्यो खुशी पाठकलाई बाँडेर म स्वयम् अझ खुशी भएको छु।

बेलाबेला यो मन केटाकेटी बन्नखोज्छ र सोच्दछ प्रधानबालाई कतै भीडमा पो देख्छु कि! कतै भेट्छु कि! अहँ, सम्भव छैन! तैपनि मनभित्र सम्झनामा उनलाई व्यूँझाउँछु। मलाई कहिलेकाहीँ प्रधानबाले उसबेला तेह्रथूम मोराहाङको डाँडामा पलेंटि कसेर आफ्ना दौंतरीसित ठट्टा गर्दै हाँसेको झझल्को आउँछ अनि त्यसरी नै मलाई पनि खुलेर हाँस्न मन लाग्छ, तर खै डाँडा, चौतारी, अनि मेरा दौंतरी! ...

# (२०) तालु

‘तालुमा आलु फल्छ’ भन्दा कसैलाई अचम्मै लाग्ला। कसैको भाग्य सप्रियो भने त्यसलाई तालुमा आलु फलेको भनिन्छ। कुनै परिवारमा छोराहरू भटाभट जागिरे भए भने गाउँतिर फलानाको त तालुमा क्या आलु फलेको भन्छन्। तर यही आलु परीक्षामा फल्यो भने चाहिँ कुरो खत्तम हुन्छ। फलानाको छोराले त यसपालि आठ कक्षामा आलु खाएछ भन्नाले त्यो विद्यँर्थी फेल भएछ भन्ने बुझिन्छ। हेर्नुस्न, यही आलु तालुमा फल्दा कति राम्रो तर परीक्षामा फल्दा भने कस्तो आपत!

त्यसैले कुनै वस्तुको नाम केसँग जोडिएको छ भन्ने कुरो निकै महत्वपूर्ण हुँदोरहेछ। साथीभाइ एकठाउँ सँगै बसेर चिया खाँदै थियौं। ‘हैन वेदप्रसादजी वेद चैं तपाईंले कहाँ पढ्नु भएको?’ वेदप्रसादजी उत्तर दिए– ‘हैन यार, मैले वेद त कहाँ पढेको छु र नाम मात्र पो त यार।’ छेउमा बसेर चिया पिइबसेको मलाई त्यसबेला हाँसो थाम्न निकै मुस्किल परेको थियो। नाम मिलेर मात्र पनि हुँदैन रहेछ नाम र कामको पनि अन्तर्सम्बन्ध हुँदोरहेछ।

तालुमा आलु जस्तो खालको फले पनि राम्रै हुने रहेछ। केवल फले मात्र पुग्दो रहेछ। यसैले तालुको आकार–प्रकारको भिन्नताले पो सबै कुरो निर्धारण गर्ने हो कि जस्तो लाग्यो मलाई

एकपटक। भानुजी भरखरै किनेको डिजिटल क्यामेराले ऋषिजीको फोटो खिचिर्दिँदै थिए, खिचेपछि फोटो देखाउँदै उनले ऋषिजीलाई भनें– "तपाईको निधार त ठ्याक्कै देवकोटाको जस्तो छ। अलि कविता लेख्ने गर्नोस् यार! भविष्य राम्रो देखायो यो फोटोको तालुले!"। छेउमा बसेर उनीहरूको भलाकुसारी सुनेपछि मलाई त हाँसु कि नहाँसु भयो।

म केटाकेटी हुँदा तालु खुइलेका मान्छे देख्दा त्यो मानिस त निकै विद्वान होला जस्तो लाग्दथ्यो। उसबेला तालु खुइलेका मानिस कि त गुरु हुन्थे कि त भलाद्मी हुन्थे। चानचुने मान्छेको तालु खुइलेको उसबेला देखिदैनथ्यो। मेरो गाउँमा एकजना भुवानसिंह थिए उनको तालु ठ्याक्कै माओत्सेतुङको जस्तै थियो। उनी कुनै दिन ठूलै नेता पो हुन्छन् कि भनेर उनलाई निकैले आस देखाए। तर विचराले जीवनभर निधारमा नाम्लो र पिठ्यूमा भारी बोक्नुपऱ्यो। उनलाई उनको जीवनमा माथि उक्लन वा अघि बढ्न तालुले क्यै मद्दत गरेन। अर्थात् कसैको तालु कसैको जस्तै खुइलेर पनि नहुने रहेछ।

मलाई किन किन कसैको तालु देख्यो भने मनमा नानाथरी कुरा खेल्दै भित्रैदेखि हाँस उठेर आउँछ। यसरी तालु खुइलेको देखेर हाँस उठ्नुमा एउटै कारण छ तालुखुइलाइका स्टाइलहरू। अर्थात् तालु खुइलाइका किसिम पनि विचित्र विचित्रका हुँदारहेछन्।

एक जना तिवारीजी हुनुहुन्छ उहाँलाई अगाडिबाट झलक्क हेर्दा कसैले उनको तालु खुइलेको छ होला भनेर अन्दाज गर्दैनन्। तर एकछिन गफ गर्दागर्दै उनको शिरमाथि आँखा पुग्यो भने जोकोही झसङ्घै हुन्छन्। 'अरे, तपाईंको पनि यति चाँडै तालु खुइलेको!' भनेर सोधिहाल्छन्। मैले पनि उनलाई यसरी नै सोधिहालें। ठट्टा गर्ने शैलीमा मैले भने– 'हैन यार मैले तपाईको जस्तो तालु खुइलेको त आजसम्म देखैकै थिइन। जंगलको बीचमा गोलो चौरजस्तो अथवा समुन्द्रको बीचमा टापुजस्तो पो लाग्यो मलाई त!' भनेको मात्र थिएँ उनी त पीरले गम्भीर भए। म हाँसेको देखेर एकछिन पछि उनले पनि रुञ्चे हाँसो हाँसे। पछि मलाई नरमाइलो लाग्यो –व्यर्थ जिस्काइएछ भनेर।

वास्तवमा मलाई उनको त्यो तालु देखेर त्यसै हाँस उठेको भने चाहिँ होइन पाठक! उनको त्यो तालुमा एउटा पूरी आकारको गोलाई छ। यसलाई उनले जति कोशिस गरेर केश मिलाएर कोरेमा पनि पूरै छोप्न चाहिँ सकिन्न। तर पनि उनलाई झलक्क हेर्दा चाहिँ हत्तपत्त नदेखिने

अचम्म खालको रहेछ उनको तालु। उनको त्यो तालु देख्दा मलाइ मेरो खेतको याद आयो। उनको तालुखुइलाई कसोकसो हेर्दा कतै कूलो थुन्नलाई हरियो चउरमा कोदालोले गोलो चपरी काटेपछि बनेको खोपिल्टो जस्तो देखिन्छ। केटाकेटी झगडा पर्दाखेरी कसैले भुत्ल्याएर झारेको हो कि जस्तै पनि देखिन्छ। तर यो सब चाहिँ भन्ने आँट मलाई आएन।

अर्का एकजना चापागाइँजी छन्, उनको तालु यति छिटो खुइलियो कि कुनै राजतीतिक हलचल हुँदा वन फँडानी भए जसरी नै उनको तालु खुइलियो। उनको उमेर केवल ३५-४० वर्ष मात्र हो। तर कति छिटो त्यत्रो केश स्वाट्सुट्ट गायब भयो भनेर हामी सबै साथीलाई अचम्मै लाग्यो। साथीको केश झरेर यति छिटो तालु देख्दा मैले पनि यसो एकपटक मेरो टाउकोमा हात पुऱ्याएछु थाहै नपाई।

एकदिन बिहान चिया खाँदै गर्दा मैले उनलाई– 'तपाईको यो तालु त गोर्वाचोभको तालुलाई पनि मात गर्ने खालको छ यार। यसबाट के सजिलो र के अप्ठेरो छ मित्र?' भनेर सोधें। उनले बडो सहज ढङ्गले जवाफ दिए। सजिलो के छ भने मैले केश काट्नै पर्दैन केवल कानको घेरा वरिपरि कैंचीले आफै काट्दा भैहाल्छ। अप्ठेरो के छ भने मुख धुँदा सधैं टाउकै धुनुपर्छ। मलाई उनको भनाइ सुनेर बडो रमाइलो लाग्यो। उनै मित्रलाई एकदिन कतै ढोकामा छिर्ने बेलामा कपाल बिनाको उनको नाङ्गो टाउको ठोक्किएछ। यसो तालु हेरेको त घाउनै भएछ। यसलाई ढाकछोप गर्न पनि उनले टोपी नलगाई नहुने भो। उसबेला मलाई उनको तालु देखेर दया पनि लाग्यो।

तालुमा आलुका कुरा वास्तवमा कुरै मात्र रहेछन् त्यो फल्नलाई तालुको बनावट र प्रकारको कुनै सम्बन्ध रहेनछ। भाग्यको आलु साँच्चै तालुमा फलाउन कर्मका आलुबारीमा फलाउनलाई झैं मेहनत गर्नु पर्दोरहेछ भन्ने टुङ्गोमा पुगें म।

त्यसैले आजकल म कसैका तालुतिर हेर्न छाडेर उसका हातका नङ्ग्रा र कर्मठ जीवनशैलीको अध्ययन गर्नतिर लागेको छु।

# लेखकका अन्य प्रकाशनहरू

साहित्यिक प्रकाशन

- जीवन मेरो शब्दकोशमा, *Jeewan Mero Sabdkoshma*, an anthology of poems, 2006
- बीच बाटोमा ब्यूँझेर, *Bich Batoma Byujhera*, an anthology of poems, 2008
- यात्रा आधा शताब्दीको, *Yatra Aadhaa Satabdiko*, an anthology of poems, 2011
- चीत्कार, *Chitkaar*, Muktak, short poems, 2012
- सहिदलाई सलम, *Sahidlaai Salaam*, Lyrics, 2010
- मन र माटो, *Mann Ra Maato*, Lyrics,2016
- मनको मझेरो, (प्रथम संस्करण) *Manko*

*Majheri*, Essays, 2007

- समयको स्वाद, *Samayako Swad*, Essays, 2013
- Life in My Dictionary, Poems, 2020
- The Mind Canvas, Essays, 2021
- जोखनामा वर्तमान, *Jokhanama Vartaman*, Poems, 2021
- Self-Reflection at the Moment, Poems, 2022
- *Life in my Dictionary*, An Anthology of Poems, 2020
- *The Mind Canvas*, Essays, 2021
- Self-Reflection at the Moment, Poems, 2022
- सिक्काका दुवै पाटा, *Sikkaka Duvai Pataa,* Essays, 2022, and
- Both Sides of Coins, Essays, 2022

सांस्कृतिक प्रकाशन

- तुङदुङ्गे मुन्धुम समीक्षा, २०२०
- Tungdunge Mundhum Review, 2020
- किरात लिम्बू संस्कृति मानवशास्त्रीय विवेचना, २०२१, २०२३
- Kirat Limbu Culture, Anthropological Investigation, 2023
- तुङदुङ्गे मुन्धुम, किरात आख्यान, एक अध्ययन, २०२३

- An Investigation of Tungdunge Mundhum, 2023
- फयङ साँबा वंशावली, २०२३
- Genealogy of Phyang Samba, 2023

सांगीतिक प्रकाशन

- देशको माया, Deshko Maya, Collection of Patriotic songs, 2010
- हामी पहिले नेपाली, Hami Pahile Nepali, Collection of Patriotic songs, 2013
- लुकेको रहर, Lukeko Rahar, Collection of Ghazal Album Audio, 2011
- अमूल्य जीवन, Amulya Jiwan, Collection of Modern songs, 2012
- बहारसंग, Bahaar Sanga, Collection of Modern songs, 2016
- हिमालैमा हिउँ, Himalaima Hiun, Collection of Folk Songs, 2014, and
- प्रतिविम्ब, Video Albums 'Pratibimba' Series-1 to 4.

जनस्वास्थ्यसम्बन्धी प्रकाशन

- Traditional and Modern Health Care Practices and Effects on Rajbanshi, 2016.
- Health Seeking Behaviour of Rajbanshi in Morang, Nepal, 2001.

- Assessment of Health Improvement Program, 2003 (Co-writer)
- जनस्वास्थ्य अभ्यास र अनुभूति, Janaswasthya Abhyas Ra Anubhav (Collection of Public Health Articles in Nepali) 2017.
- जनस्वास्थ्य पाटा, बाटा, र अनुभूति, Janaswasthya Paataa Baataa Ra Anubhuti (Collection of Public Health Articles in Nepali) 2006.
- जनस्वास्थ्यका सवालहरू, Janaswasthyaka Sawaalharu (Collection of Public Health Articles in Nepali) 2007.
- खोटाङको स्वास्थ्य, Khotangko Swasthya,1998.
- Edited Annual Reports of Eastern Regional Health Directorate Dhankuta (2000 to 2003) and Annual Reports of District Public Health Office Morang/ Jhapa (2004 to 2013).